● वर्ष १० ● अङ्क ५ ● पौष २०६५ ● पूर्णाङ्क ११३



**सम्पर्क कार्यालयहरू**

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर-९, शेराबजार
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## संस्कार विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**

**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

आजको समाज नजानिदो रुपबाट अध्यात्मतर्फ अग्रसर भएको पाइन्छ । समाजमा प्रायः प्रत्येक व्यक्तिहरु कुनै न कुनै घर्म संघ सम्प्रदायसँग सम्बन्धित भएको पाइन्छ । हुनत नेपाली समाज सधैं आध्यात्मिक भावभूमिमा हुर्केको समाज हो । दैवी लीलाको क्रिडास्थल हो । देवी देवताहरुको प्यारो भूमि हो नेपाल । ऋषिमुनि, योगी, स्वामी, सन्त महापुरुषहरुको तपश्थली हो । सदियौदेखि दैवी संस्कारले ओतप्रोत भएको हाम्रो समाज आज पनि ती संस्कारको संवाहक बनिराखेको छ । पुराण उपनिषद्, रामायण, महाभारत, त्रिपिटक आदि ग्रन्थहरु हाम्रो संस्कृतिका जीवन्त धरोहर बनेकाछन् ।हाम्रो संस्कृतिका श्रोत बनेकाछन् । त्यति मात्र होइन हाम्रो गर्वका पहिचान बनेकाछन् ।संस्कृति नै प्रत्येक क्षेत्रको परिचय हो । त्यो देशको राष्ट्रियता हो । त्यसैले देशको संस्कृति रीति रिवाज भनेको राष्ट्रको धरोहर हो । यहि संस्कृतिलाई राष्ट्रलाई जिवित राखेको हुन्छ । भनिन्छ, देशलाई विगार्नुछ भने पहिलो हमला संस्कृतिमाथि गर्नु पर्दछ । जव त्यो देशको संस्कृति नै रहदैन, तव त्यो देशको पहिचान नै मेटिन्छ भने देश हुनुको कुनै अर्थ रहदैन । त्यसैले देशको पहिचान रहेको हाम्रो धर्म संस्कृतिलाई जगेर्ना गर्नुपर्दछ । यसको संरक्षण संवर्द्धन गर्नुपर्दछ ।

नयाँ नेपालको नाममा विदेशीको इशारामा यदि हामीले हाम्रा धर्म संस्कृतिका धरोहरहरुलाई भत्काउन थाल्यौं, यिनीहरुको पहिचान मेटाउन थाल्यौं, यिनीहरुलाई विस्थापित गराउन थाल्यौं भने त्यो हाम्रो मूर्खता हुनेछ, राष्ट्रमाथिको घात हुनेछ । कारण यी चीजको माध्यमले हामी नेपाली हुनुमा गर्व गरिराखेका हुन्छौं । यसैले नै विश्व सामु हाम्रो पहिचान बनाएको छ । विविध धर्म संस्कृति भित्रका हाम्रा रीति रिवाज रहन सहन आदि नै नेपाल र नेपालीको पहिचान हो । त्यसैले नेपालीहरुको धरोहरको रुपमा रहेको धर्म संस्कृतिमाथि न त सरकारले हस्तक्षेप गर्न हुन्छ न त अन्य धर्म संघ सम्प्रदायका मानिसहरुले नै । यस्ता विषयमा सवै व्यक्तिहरु चनाखो हुनु आवश्यक छ । यसपाली हामीले यस अंकलाई संस्कार विशेषकोरुपमा निकाल्ने जमर्को गरेका छौं । संस्कार मानवको सम्पत्ति बनेर आइराखेको विषय हो । चौरासी लाख योनिका जीवनका सृङ्खलाबाट मनुष्य जीवन प्राप्त गर्दछ । र विगतको यी जीवनका कर्महरु संस्कार बनेर अर्को जीवनमा सरेको हुन्छ । अर्थात् हामीले लिएका प्रत्येक जीवनका कर्महरु जीवन अनुरुपका चालचलन स्वभावहरु संस्कारको रुपबाट अगाडि बढी नै रहेको हुन्छ । जसले अर्को जीवनमा त्यही अनुरुपको कर्म गर्नका लागि प्रेरित गर्दछ । यसरी व्यक्तिले गर्ने प्रत्येक राम्रा नराम्रा कर्महरु नै व्यक्तिको संस्कार बनेर आइराखेको हुन्छ । राम्रा राम्रा कर्म गर्नेहरु राम्रो संस्कारद्वारा संस्कारित हुदैं जान्छन । नराम्रा कर्मगर्नेहरु त्यहि अनुरुपका संस्कार गर्न बाध्य हुन्छन् । यसैले राम्रा कर्म अर्थात् सत्कर्म, सद्भाव, सद्विचार, सद्चिन्तन् आदिले राम्रो संस्कारको निर्माण गर्दछ त्यसैले यी चीजहरुलाई आत्मसाथ गर्दै अगाडि बढ्यौं जीवनलाई उर्ध्वमूखि बनाऔं ।

हामीले यस अंकमा संस्कारसम्बन्धी केही विषयहरुलाई सूक्ष्म विश्लेषण गर्ने कोशिस गरेकाछौं । संस्कार विषय नै धेरै विशाल र व्यापक अर्थ बोकेको विषय भएकाले हामीले त केवल विषय प्रवेश गर्ने जमर्को गरेका हौं । यसैले यस अंकलाई स्तरीयता दिने हाम्रो प्रयासमा भएका गल्ति कमी कमजोरीको लागि परमपूज्य सद्गुरुदेवहरु समक्ष र यहाँहरु समक्ष पनि क्षमा माग्दै आवश्यक सल्लाह सुझाव एवं प्रतिक्रियाको आशा राख्दछौं । अस्तु !

# जीवन र संस्कार

जीवले हजारौँ स्वरूपहरू धारण गर्ने क्रममा कुनै बेला कुनै स्वरूप धारण गर्छ, कुनै बेला कुनै स्वरूप धारण गर्छ । यस क्रममा जीवले विभिन्न प्रकारका कीट-पतङ्गको जीवन पनि लिएर आउँछ । चौरासी लाख जीवन पार गरेर आउँदा सबै प्रकारका जीवन जीवले व्यतीत गर्दै आइरहेको हुन्छ । चौरासी लाख योनिमध्ये प्रत्येक योनिमा प्राप्त हुने जुन आयु छ, जीवले स्वरूप धारण गरिसकेपछिको जुन अवस्था छ, त्यो सबै जीवन हो । तर उसका ती जीवनहरू अलग-अलग प्रकारका हुन्छन्, उसको समय अलग-अलग प्रकारबाट व्यतीत हुन्छ । ऊ जुन-जुन योनिमा प्रवेश गर्‍यो, त्यही-त्यही जीवन उसले व्यतीत गरेको हुन्छ । जीवको जीवन भनेको नै जुन योनि प्राप्त भयो, त्यस योनिमा उसले व्यतीत गर्ने समय हो । त्यसबेला उसले के कर्म गर्नुपर्छ, के खानुपर्छ भन्ने कुरा ऊ कुन योनिमा छ भन्ने तथ्यले निर्धारण गर्दछ । उसले जे-जे गर्दछ, त्यो सबै उसको आत्मामा आवरणको रूपमा बस्दै जान्छ । कीरा भएको बखत कसरी उसले जीवन व्यतीत गरेको हुन्छ, उसको जीवन नै त्यही हो । उसले कति इलाकाभित्र उफ्रिने अथवा यताउता हिँडडुल गर्ने गर्दछ, त्यो नै उसको लागि जीवन हो । उसमा अज्ञानता छाइरहेको हुन्छ, थाहा नपाउँदा-नपाउँदै पनि उसले त्यो जीवन व्यतीत गरिरहेको हुन्छ । उसमा कुनै पनि प्रकारको चेतना हुँदैन । जब उसले त्यो देहलाई त्याग गर्छ, उसको संसर्ग जहाँ पुगेको भए पनि अन्तिम अवस्थामा उसको आत्मामा जुन चीजको छाप परेको हुन्छ, त्यसैअनुसार उसले जीवन प्राप्त गर्छ । उसले भोग्नुपर्ने भोगाइहरू पनि भोग्दै गइरहेको हुन्छ भने आफूभन्दा माथिल्ला जीवनहरू पनि प्राप्त गर्दै आइरहेको हुन्छ ।

शास्त्रले चौरासी लाख योनिमा सबैभन्दा उत्कृष्ट योनि मनुष्य योनिलाई मानेको छ । अरू कीरा, फट्यांग्रा,

कीट-पतङ्गहरू जे जति प्रकारका छन्, त्यही जीवले देह धारण गरेको भए पनि त्यहाँ उसमा अज्ञानताले घर गरेको हुन्छ, उसले चाहेर पनि केही गर्नै सक्दैन । तर मनुष्य जीवनमा सबै चीज गर्न सकिन्छ । तर उसले चौरासी लाख योनि पार गर्दै आउने क्रममा चाहेर नचाहेर जति पनि कर्महरू गरेको हुन्छ, ती सबै कर्मका आवरणहरू एकै ठाउँमा जम्मा भएर त्यो एउटा मायास्वरूप बनिदिन्छ । मनुष्य जीवन चेतनशील जीवन भएता पनि त्यही मायाले छेकिदिन्छ । ऊ सधैँ त्यही एउटा चक्रव्यूहमा घुमिरहेको हुन्छ । बेला-बेलामा गुरुसत्ताबाट उसलाई चेतना प्राप्त भएता पनि उसमा केही समय मात्र त्यसको प्रभाव पर्ने हुन्छ, बाँकी समय त मायाले नै घेरेको अवस्था हुन्छ । मनुष्य देह सबैभन्दा उत्कृष्ट हो भन्ने कुरा पनि कतिपयलाई त थाहै हुँदैन । मनुष्य भएर पनि यस प्रकारको चेतना उनीहरूले प्राप्त गरेकै छैनन् । तपाईं-हामी मनुष्य भएर त्यस प्रकारको चेतना, त्यस प्रकारको विषयवस्तु थाहा पायौँ भने अवश्य पनि हाम्रो लागि यो सौभाग्य हो । यी कुराहरू थाहा पाउनु जीवनको धरोहर हो । यसलाई थाहा पाएर हामीले हाम्रो जीवनमा, व्यवहारमा लगाएर साँच्चिकै आफ्नो जीवनलाई ऊर्ध्वमुखी बनाउँदै लैजान सक्यौँ भने यो जीवनको महत्त्व हुन्छ । आज, भोलि, पर्सि भन्दाभन्दै मनुष्य जीवन सकिएको थाहै हुँदैन । पलपल समय बित्दै गइरहेको हुन्छ, तर सूर्य अस्ताउने बेला भएको थाहै हुँदैन । सूर्य अस्ताउने बेलामा आफ्नो यात्रा कहाँ पुगेको छ, आफ्नो निवासमा फर्कन भ्याइन्छ कि भ्याइँदैन भन्ने विचार गरेको छैन भने त्यहीं अलपत्र हुने अवस्था बन्दछ ।

एउटा सियोको टुप्पोमा हजारौं सूक्ष्म शरीर अट्छन् भने तिनीहरू कति सूक्ष्म होलान् ? त्यस्तो प्रकारको सूक्ष्मभन्दा अति सूक्ष्म एउटा सानो भ्रूण (सूक्ष्म जीवाणु) गर्भावस्थामा देहमा प्रवेश गरेर मनुष्य देह धारण गरेर आमाको पेटमा उसले आफ्नो आकारहरू सृजना गर्दै, विकसित हुँदै नौ महिनासम्म व्यतीत गर्छ । त्यस बेलासम्म उसलाई सबै चेतना हुन्छ, उसलाई मायाले छोएको हुँदैन, उसलाई सबै यावत् वृत्तान्त थाहा हुन्छ, युगयुगान्तरका सबै कुराहरू थाहा हुन्छ । त्यतिबेलाको उसको ध्येय भनेकै अब म यो ब्रह्माण्डबाट मानव देहमा प्रवेश गरेँ, यहाँबाट बाहिर निस्कने

> सपनामा त्यो विचारको प्रभाव पर्नासाथ नै थोरबहुत संस्कारजस्तो निर्माण हुन्छ । मन-मस्तिष्कमा चौबीसै घण्टा राम्रा विचारहरू केन्द्रित गर्नाले त्यो संस्कार बनेर भित्र आत्मामा जान्छ ।

कसरी हो भन्ने हुन्छ । चौरासी लाख योनि पार गर्नलाई जति कष्ट हुन्छ, त्यसभन्दा पनि कष्ट जीवलाई गर्भावस्थामा रहँदा हुन्छ । उसले जन्मना साथ नै सबै बिर्सन्छ । उसलाई मायाले छोप्छ, एकछिनपछि थोरै चेतना आउँछ । चेतना आएपछि ऊ रुन थाल्छ– म कस्तो संसारमा आइपुगेँ ? दिनदिनै मायाले छोप्दै लगेपछि बिस्तारै आफ्नो चेतना अवस्था पनि हराउँदै जान्छ । उसलाई परमात्माबाट छुटेर आएका सबै अवस्थाहरूको चित्रण हुन्छ, थाहा हुन्छ, कहिले भने यो अवस्था पुनः बिर्सिन्छ । आफू कुन ठाउँबाट कसरी आइयो भन्ने याद गर्दागर्दै ऊ भुसुक्क निदाउँछ । निद्राबाट एकैपटक ऊ रुन थाल्छ, आफ्नो आत्माको गतिलाई अब कसरी परिष्कृत गर्ने होला भनेर उसलाई सधैँ चित्त दुःखाइ हुन्छ, उसले यसमा खेद प्रकट गरेको हुन्छ । त्यसकारण ऊ अप्रत्याशितरूपमा रुन्छ । बाल्यावस्थामा उसको आत्मा चलायमान स्वरूपमा, जागृत स्वरूपमा हुन्छ । उनीहरूलाई हामी विभिन्न किसिमबाट पालन-पोषण गर्दै लैजान्छौँ । त्यसपछि उनीहरूमा बिस्तारै अज्ञानस्वरूप आउन थाल्छ । साना बच्चाहरू अप्रत्याशितरूपमा रुने गर्छन्, अप्रत्याशितरूपमा हाँस्ने गर्छन्, उनीहरूको विभिन्न हाउभाउ हुन्छ । उनीहरूलाई हेर्‍यौं भने हामीले थाहा पाउन सक्छौँ कि छिनछिनमा उनीहरूले वर्णलाई परिवर्तन गर्छन्, रंग परिवर्तन गर्छन् । उनीहरूको औरा मण्डल पनि धेरै क्रियाशील हुन्छ । छिनछिनमा उनीहरूले आफूलाई याद गरिरहेका हुन्छन् । यसप्रकार कुनै बालक बिस्तारै-बिस्तारै बढ्दै गइरहेको हुन्छ । बच्चाले दूध खाँदा दूधको माध्यमबाट आमाले खाएको खानाअनुसारको उसको स्थिति हुन्छ । आमाले राम्रो चीज खाँदा उसलाई राम्रै हुन्छ, नराम्रो चीज खाँदा खानपानको अशुद्धताले बच्चा बिरामी हुन्छ । बच्चा अवस्थामा धेरै बिरामी हुनुको कारण यो हो कि बच्चाको आत्मा एकदमै शुद्ध हुन्छ । खानपान दोष हुनासाथ नै बिरामी भएर उसले भोगिहाल्छ । बाँकी रह्यो भने पछि फेरि सावाँ-ब्याज गरेर धेरै हुन्छ भनेर उसले भोग्नुपर्ने भोगाइ बिरामी भएर भोगिहाल्छ । आत्मा स्वयंले नै बिरामी बनाइदिन्छ कतिपय अवस्थामा । शुरुमा उसले कसैलाई चिनेकै हुँदैन, उसको आँखा त हुन्छ तर उसले देखेकै हुँदैन, आँखाले काम गरेको हुँदैन । पछि बिस्तारै आँखाले काम गर्दै आउँछ । शुरुमा त ऊ यो सारा विश्व मेरो आफ्नै हो भन्ने भावनाबाट विकसित भएर आइरहेको हुन्छ । तर बिस्तारै ठूलो हुँदै गएपछि बाबुआमाले उसलाई यो तेरो ठूलोबुबा, यो ठूलीआमा, यो सानीआमा, यो सानोबुबा, यो दिदी, यो

भाइ, यो हजूरबुबा, यो हजूरआमा, त्यो त परको मान्छे, यो चाहिँ नजिकको मान्छे भनेर चिनाउँदै जान्छन् । यसरी भागबण्डा गरिदिएपछि उसको मस्तिष्कमा दिग्भ्रमित विचारहरूले घर गरेर बिस्तारै उसको तीक्ष्ण स्वरूपलाई बोधो पार्दै लैजान्छन् । यस प्रकारबाट ऊ विकसित हुँदै बढ्न थाल्छ । बच्चाले बोलेको शुभ वाणी हुन्छ, बोलेको कुरा पुग्छ भनिन्छ । यसको कारण यो हो कि बच्चा अवस्थामा उसमा पवित्रता हुन्छ । जब पवित्रता हुन्छ तब उसले बोलेको पनि पुग्छ । ऊ ठूलो हुँदै आएपछि पवित्रताबाट ऊ बिस्तारै बिग्रँदै माथि आउँदा उसले बोलेको पुग्दैन ।

उसको जीवन यसरी शुरु हुँदै आइरहेको हुन्छ । बाबुआमाको माध्यमबाट उसले आफ्नो संस्कारमा केही फेरबदल गर्छ । त्यसका अतिरिक्त पनि उसको पूर्वसंस्कार के छ, त्यो पूर्वसंस्कारले पनि धेरै काम गरिरहेको हुन्छ । यस जीवनको संस्कार त छँदैछ तर पूर्वसंस्कारले पनि उसलाई प्रभाव पार्दछ । त्यसैले पूर्वसंस्कार र अहिलेको संस्कारको समष्टिगत स्वरूप जीवन हो । पशुपंछीमा भन्दा तुलनात्मकरूपमा सप्रिने मौका पनि मनुष्यमा हुन्छ भने बिग्रने अवस्था पनि मनुष्यमा त्यत्तिकै रहन्छ । पशुपंछीहरू त प्राकृतिक हुन्छन्, प्रकृतिअनुरूप रहँदा जे हुनुपर्ने हो त्यही हुन्छ । मुनुष्य जीवनमा चाहिँ बिग्रने सम्भावना पनि बढी हुन्छ, सप्रने सम्भावना पनि बढी हुन्छ । यसरी पूर्वजन्मको संस्कारले पनि मानव जीवनलाई प्रभाव पारिरहेको हुन्छ । हाम्रा बाबुआमाले एउटा चाहना राखिरहेका हुन्छन्, उनै बाबुआमाले आफ्ना छोराछोरीहरू यस्तो बनिदिए हुन्थ्यो, उस्तो बनिदिए हुन्थ्यो भनेर हुनेसम्मको वातावरण दिलाउने कोशिश गरिरहेका हुन्छन् । त्यस्तो कोशिश गर्दागर्दै पनि सन्तानहरू उनीहरूको सोचाइ, विचारभन्दा अलग प्रकृतिका पनि बन्न सक्छन् । कोशिश धेरै गरेपछि त्यसको केही प्रभाव त पर्ने नै भयो तर उसको पूर्वसंस्कारले उसलाई त्यतैतर्फ धकेलिरहेको हुन्छ ।

तपाईं हामीले हाम्रो जीवनलाई एकपटक नियालेर हेर्‍यौं भने हाम्रो बाल्यकाल कसरी बित्यो, युवावस्था कसरी व्यतीत भयो, हाम्रो भावना शुरुमा के थियो, हामी कसरी परमपूज्य सद्गुरुदेवको शरणमा आइपुग्यौं भन्ने क्रम स्मरणीय हुन आउँछ । यसरी आइपुग्नुमा हाम्रो पूर्वसंस्कार बलियो थियो, विभिन्न निहुँ र बहानाबाट हाम्रो पूर्वसंस्कारले स्वतः नै धकेलेर यहाँसम्म ल्याइदियो । वातावरण नबन्दा पनि हामी गुरुको शरणमा आइपुग्यौं, यो पनि हाम्रो जीवन हो । अब आउने पिँढीलाई हामीले उत्प्रेरित गरिरहेका छौं, वातावरण दिइरहेका छौं, उनीहरूलाई गुरु शरणमा ल्याउने हाम्रो कोशिश एकापट्टि छ भने पूर्वसंस्कारले पनि उनीहरूलाई धकेलिदिएको हुन्छ । वातावरण पाउँदा त उनीहरू गुणात्मक हुन्छन् । जीवन त जीवन नै हो । एउटाको अलि माथिल्लो जीवन होला, अर्कोको अलि तल्लो जीवन होला ।

साधक साधिका भइसकेपछि हामीले आफ्नो जीवनलाई नियाल्ने, दिनदिनैको विचार भावनालाई नियाल्ने, अनि दिनदिनैको कर्मलाई नियाल्ने गर्नुपर्दछ । कस्तो प्रकारको कर्म भइरहेको छ, कर्ममा खोट लगाउनु पर्ने अवस्था छ कि छैन अथवा विचार भावनामा खोट लगाउनु पर्ने अवस्था छ कि छैन भनेर नियाल्नु पर्दछ किनभने यही विचार भावनाको आधारबाट कर्म गरिन्छ । कर्म र विचारको समिश्रणबाट भित्र अलिकति गाढा रङ आउन थाल्छ । बाहिरी मनबाट भित्री मन हुँदै जान्छ अनि हाम्रो अर्धचेतन मनमा अङ्कित हुन्छ । त्यसपछि हामीले सपनामा पनि त्यही कर्म गरेको देख्छौं र त्यही विचार गरेको देख्छौं । जसरी विपनामा गरेका कर्म, विपनामा भएका विचार भावनाले सपनालाई प्रभाव पार्दछन्, त्यसरी नै सपनामा पनि त्यही विपनामा पनि त्यही भएपछि बाहिरी मनमा पनि त्यही भित्री मनमा पनि त्यही एउटै कुरा हुन जान्छ । बाहिरी मन र भित्री मनको समिश्रणपछि त्यो सरेर आत्मामा जान्छ र त्यहाँ अंकित भएर बस्छ । आत्मामा अंकित भएर बसिसकेपछि त्यो युगयुगान्तरसम्म रहन्छ र यही रहिरहने प्रक्रिया नै संस्कार हो । संस्कार बनिसकेपछि हामीले जति मेट्न खोजे पनि मेट्नलाई गाह्रो हुन्छ । राम्रो संस्कार बसेको छ भने राम्रो भोग हुँदै आउँछ भने नराम्रो संस्कार बसेको छ भने नराम्रो हुँदै जान्छ । संस्कारलाई यसरी अर्थ्याउन सकिन्छ कि मानिसमा पहिले विचारको सृजना हुन्छ, विचारबाट कर्म निर्देशित हुन्छ, कर्म र विचारको समिश्रणबाट त्यो फेरि अन्तर्मनमा जान थाल्छ, उसलाई बारम्बार त्यही याद हुन्छ । हामीले दिनदिनै झगडा गरेका छौं भने हाम्रो मन-मस्तिष्कमा पनि झगडा गर्ने विषयवस्तुहरू आइरहन्छन् । हामीले झगडा गर्दै हिँड्यौं भने सपनामा पनि हामीले झगडा गरेको देख्छौं, सपनामा मान्छे मारेको देख्छौं, सपनामा आफूलाई अरूले लखेटेको देख्छौं, कहिलेकाहीं आफूले अरूलाई लखेटेको देख्छौं, बिस्तारै अरूलाई दुःखैदुःख दिने प्रकारको संस्कार हाम्रो आत्मामा अङ्कित हुन थाल्छ । गुरुको चरणमा त आइपुग्यौं तर हामीले विचार भावना कस्तो लिएका छौं, अनि कर्म कस्तो गरेका छौं, त्यसैको आधारमा हामीले प्राप्ति गर्छौं । बाहिरबाट गुरु चादर, माला त ओढिरहेका छौं तर हामीले आन्तरिकरूपमा कस्तो संस्कार बसालेका छौं, त्यही मुताबिक परमात्माले हामीलाई दिनुहुन्छ । बाहिरबाट हेर्दा त

गुरुको शिष्य भयौँ तर हाम्रो संस्कार जे छ त्यही संस्कार मुताबिक हामीले प्राप्ति गर्ने हो । आधी राम्रो आधी नराम्रो छ भने नराम्रोको नराम्रै प्राप्त हुन्छ, राम्रोको राम्रै । संस्कार सबैभन्दा बलवान् हुन्छ । त्यो संस्कारलाई कसैले पनि मेटाएर मेट्न सकिँदैन । मेटाउन नसकिने कारणले नै परमपूज्य सद्गुरुदेवले भन्नुभएको छ– ' तिम्रो यसभन्दा अगाडिको जीवनमा जे भए पनि बाँकी जीवनमा तिमीले राम्रो संस्कार बनाऊ, पूजापाठ गर, मन्त्र जप गर, ध्यान गर, चौबीसै घण्टा ईश्वरमा चित्त लगाऊ, चौबीसै घण्टा भगवान्लाई सम्झ, गुरुहरूलाई सम्झ जसबाट तिम्रो पूर्वजन्म, त्यसभन्दा अगाडिको जन्म, त्यसभन्दा पनि अगाडिको जन्मको बारेमा बिस्तारै थाहा हुँदै जान्छ । थाहा हुँदै गएपछि संस्कारमा भएका खराबीहरू हटाउन तिमीले संस्कार बसाल्नुपर्छ ।' संस्कार बसाल्न विपनामा भएका कुराहरू सपनामा देख्नुपर्‍यो, विपनामा भएका र सपनामा देखिएका कुराहरूको आडबाट आत्मामा अंकित हुनुपर्‍यो । अनि मात्र आत्मामा संस्कार बस्न सक्दछ । अनि राम्रै राम्रोको वृद्धि गरेपछि त्यो राम्रो संस्कार भित्र प्रवेश हुन्छ । अगाडिको जुन नराम्रो संस्कार छ, त्यो त भोग्नैपर्छ । कतिपयले सपनामा भोगेर पनि आफ्नो भोगाइ मेटाइरहेका हुन्छन्, कतिपयले ध्यानमा भोगेर पनि भोगाइ मेटाइरहेका हुन्छन् । कतिपयले रोग-व्याधिको माध्यमबाट पनि भोगाइ मेटाइरहेका हुन्छन् । हामीले सय जीवन बितायौँ, उनान्सय जीवनहरू साह्रै निकृष्ट थिए तर सयौँ जीवनमा भाग्यवश परमपूज्य सद्गुरुदेवले आफूमा खिचेर ल्याइदिनु भयो भने यो एउटा जीवन हाम्रो लागि उत्कृष्ट मानिन्छ । ती उनान्सय जीवनका जे-जति संस्कारहरू छन्, खराब पक्षहरू छन्, तिनीहरूले बारम्बार हाम्रो यो एउटा जीवनलाई खाइदिन सक्छन् । हामीले यो एउटा जीवनलाई उत्कृष्ट बनाउने कोशिश गर्दागर्दै पनि ती उनान्सय जीवनले त हामीलाई धकेल्न नै खोजिरहेका हुन्छन् । त्यसैले चित्तवृत्तिमा बडो शक्तिशाली भएर राम्रो संस्कार भित्र्याइरहनु पर्छ । त्यसो भयो भने संस्कार बलियो हुन्छ । बलियो संस्कार भएपछि सबै कुरा सरल र सहजरूपमा प्राप्त हुन सक्दछ । संस्कारलाई असल कसरी बनाउने, बलियो कसरी बनाउने, सुसंस्कारमा कसरी चित्तवृत्तिलाई लगाउने भन्ने कुरा त आफूबाटै शुरु गर्नुपर्दछ । हामीले बिहान उठेर विभिन्न रूपले राम्रा कर्मकाण्डहरू गर्‍यौँ, पूजा, पाठ, जप, तप, ध्यान गर्‍यौँ भने ती कर्महरूले आत्मालाई प्रसन्न बनाउँछन् । बिहान उठ्नासाथ नै हामीले आफूभित्रको आत्मालाई प्रसन्न बनाउनु पर्दछ । आफूभित्रको आत्मालाई मित्रको रूपमा तुलना गरेर सबैभन्दा पहिलो अभिवादन आफैभित्रको मित्रलाई गर्नुपर्दछ । हामीले आत्मासँग यसप्रकारले प्रार्थना गरौँ कि आजको दिन मेरो शुभैशुभ होस्, मसँग भेट हुने साथीभाइहरू राम्रैराम्रा हुन्, नराम्रा साथीभाइसँग बरु भेट नै नहोस्, राम्रा साथीहरू छैनन् भने बरू आज कोही पनि भेट नहोस्, आजको लागि मेरो साथी नै हजूर हुनुहुन्छ । यसरी हाम्रो संस्कार यहीँबाट शुरु हुन्छ ।

कोही साथी भेट हुँदा उससँग पहिलो अभिवादन हामीले कसरी गर्छौँ, हाम्रो प्रस्तुतिकरण कस्तो हुन्छ, त्यो महत्त्वपूर्ण हुन्छ । हामीले राम्रो बोलेका छौँ भने त्यो साथीलाई पनि यो व्यक्ति त राम्रो बोल्ने, मीठो बोल्ने रहेछ भन्ने भान हुन्छ । त्यसको प्रभाव राम्रो पर्दछ अनि उसबाट तपाईँलाई आशीर्वाद आइरहेको हुन्छ । आजको दिनमा सबैभन्दा पहिले भेटेको मान्छेबाट मलाई कति राम्रो शब्द आयो, कति मीठो शब्द आयो भन्ने महसुस हुन्छ उसलाई । उसले आफूलाई पनि धन्य ठान्दछ अनि उसबाट सकारात्मक तरंग हामीसम्म आइपुग्छ । संस्कार भन्ने कुरा आफूबाट शुरु गरेपछि अरूलाई सर्ने हुन्छ र अरूबाट पनि हामीमा आउने हुन्छ । त्यसकारण संस्कारलाई राम्रो वा नराम्रो बनाउनलाई विचार भावनाहरू सबैभन्दा ठूला हुन्छन् । विचार भावनालाई व्यक्तिले कसरी आफूभित्रबाट आन्दोलित गरिरहेको छ, यसैको आधारमा उसको संस्कार बनिरहेको हुन्छ । परमात्माबाट पनि उसका खराब संस्कारहरूलाई हटाउनको लागि विभिन्न परिस्थितिहरूको सृजना भइरहेको हुन्छ ।

त्यसकारण मनमा विभिन्न किसिमका विचारहरू हुन्छन् । राम्रा विचारहरूले हामीमाथि राम्रो प्रभाव पार्दछन्, नराम्रा विचारहरूले हामीमाथि नराम्रो प्रभाव पार्दछन् । त्यसको आधारमा हाम्रो विचार भावना बिग्रनासाथ नै सपनामा प्रभाव पर्छ । अनि सपनामा पनि त्यही र विपनामा पनि त्यही भएपछि एकदिन बाध्यता, विवशताको रूपमा स्वतः नै फेरि त्यस्तै किसिमको कर्म हुन्छ । हामीले कसैलाई अनिष्ट गर्ने विचार गर्‍यौँ भने एकदिन बाध्यताले त्यस्तै हुन्छ । त्यसकारण मनलाई शुद्ध, पवित्र राख्नाले, मनलाई राम्रो बनाउनाले, मनमा राम्रा-राम्रा विचारहरू सृजना गर्नाले त्यसको प्रभाव सपनामा पर्छ । सपनामा त्यो विचारको प्रभाव पर्नासाथ नै थोरबहुत संस्कारजस्तो निर्माण हुन्छ । मन-मस्तिष्कमा चौबीसै घण्टा राम्रा विचारहरू केन्द्रित गर्नाले त्यो संस्कार बनेर भित्र आत्मामा जान्छ । यसरी संकलित राम्रा संस्कारहरूको प्रभावबाट आगामी जीवनमा समेत अनुकूल प्रभाव पर्न जान्छ जसको फलस्वरूप उक्त आत्मा परमात्मा प्राप्तिको दिशातर्फ अग्रसर हुँदै मोक्षको अधिकारी हुन्छ ।

जय गुरुदेव !

# अद्वितीय त यसरी भइन्छ...

*– परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज*

जीवनमा यदि प्रेम छैन भने हरियाली पनि हुँदैन, जीवनमा अद्वितीयता पनि हुँदैन, जीवनमा आनन्द हुँदैन, जीवनमा उमङ्ग हुँदैन । बिहान उठेर स्नान गऱ्यो, श्रीमतीलाई गाली गऱ्यो, अफिस गयो, फर्केर आउँदा आफूसँगै सागपात लिएर आयो, अफिसमा हाकिमलाई समेत गाली गऱ्यो र घर आएर खाना खाएर सुत्यो ।

यसका अतिरिक्त तिम्रो जीवनमा सरसता कहाँ छ ? कुनै मधुरता छ ? कुनै हास्य छ ? आशा छ ? जोश छ ? म कराइरहेको छु– हाँस्नू, मुस्कुराउनू । तर कसरी हाँस्ने ? तिम्रो जीवनमा उमङ्ग नै छैन, कसरी हाँस्छौ तिमी ? मैले भन्नु बेकार छ किनकि तिम्रो जीवनमा प्रेम भन्ने चीज नै छैन ।

त्यसैले मैले भन्दा पनि तिमी दाँत देखाएर, नक्कली हाँसो नै हाँस्नेछौ । म सोच्नेछु कि तिमी मुस्कुरायौ । फर्केर तिमी जस्ताको तस्तै बस्छौ जस्तो पहिले थियौ । मेरो भनाइबाट पनि तिम्रो अनुहारमा मुस्कुराहट आउन सक्दैन, ओज आउन सक्दैन, उमङ्ग आउन सक्दैन । तिमीले आफै सोच जीवनमा आफूलाई के प्राप्त भयो ? उमङ्ग छैन, जोश छैन, आनन्द छैन । यदि यो स्थिति छैन भने फेरि यो कव्वाली, गजल, शायरीहरूको पनि तिम्रो जीवनमा कुनै अर्थ छैन । संगीत, नृत्यजस्ता कुराहरू सबै बेकार हुन् र जसलाई जीवनमा केही पनि प्राप्त हुँदैन, उसले अरूलाई गाली मात्र गरिरहन्छ ।

प्रेम गर्नु, प्रणय गर्नु आफैमा अपराध हुँदै होइन र यदि आँखामा त्यो वशीकरण, त्यो सम्मोहन क्रिया छ भने त तिमी र श्रीमतीको बीचमा लडाइँ-झगडा हुनै सक्दैन । सबैभन्दा ठूलो समस्या त तिम्री श्रीमती नै हुन् । अरू त कुनै हेडेक छैन र श्रीमतीको हेडेक हटाउनै सकिँदैन । तिमीले श्रीमतीलाई घरबाट निकाल्न सक्तैनौ किनकि घरमा एकपटक लिएर आएपछि सदाको लागि लिएर आइयो । के गर्न सकिन्छ ? उसलाई सम्झाउँदा पनि सम्झिन्न, मनाउँदा पनि मान्दिन । कुरा गर्दा पनि गर्दिन । किनकि उसलाई त पत्नी हुनुको गर्व छ, पतिव्रता हुनुको गर्व छ ।

कसरी हामीले पत्नीलाई वशमा पार्ने ? कसरी हामीलाई गाली गर्नेहरूलाई वशमा पार्ने र वशमा पारिसकेपछि उनीहरूमा प्रेम भर्ने र कसरी आफ्नो जीवनमा उमङ्ग छाओस्, हरियाली आओस्, मस्ती आओस्, जोश आओस् ? त्यसको लागि त हामीले सान्दीपनको सहयोग लिनुपर्दछ । सान्दीपनरचित ती श्लोकको सहारा लिनुपर्दछ जसमा त्यस अचूक ज्ञान, त्यस चिन्तनलाई, ती भावनाहरूलाई, ती क्रियाहरूलाई दिइएको छ जुन क्रिया उनले कृष्णलाई दिए र कृष्णजस्तो प्रेमी उत्पन्न भए । अरू उत्पन्न हुनै सक्दैनन् किनकि कृष्णलाई पूर्णरूपमा सान्दीपनले त्यस ज्ञानलाई, त्यस क्रियालाई, त्यस मन्त्रलाई दिए । त्यस मन्त्रको माध्यमबाट उनले समस्त देवताहरूलाई, शत्रुलाई, मित्रलाई, गोप गोपीहरू सबैलाई आफ्नो नियन्त्रणमा राखिरहे ।

हामी पनि जीवनमा त्यस्तै बन्नुपर्दछ । यसका लागि उमेर कुनै कोणबाट पनि बाधक हुँदैन । यसका लागि जाति पनि बाधक हुँदैन, यसका लागि रङ पनि बाधक हुँदैन, कुनै अग्लो होचोले बाधा पुऱ्याउँदैन ।

जब पहिलोपटक तिमीले हाकिमलाई हेर्छौ र उसले तिमीतिर हेर्छ, त्यसपछि उसले तिम्रो कुरालाई टार्न सक्दैन भने त्यसलाई सम्मोहन सिद्धि भनिन्छ । प्रारम्भमा मैले तिमीलाई मुस्कुराहटका साथ उभिन भनेको थिएँ । तर मलाई थाहा छ कि तिम्रो मुस्कुराहट क्षणिक छ किनकि तिमीभित्र प्रेमको त्यो रचना बनेकै छैन, तिमीभित्र त्यो पङ्क्ति नै बनेको छैन जसको माध्यमबाट प्रेम गर्न सकियोस्, जसको माध्यमबाट हामीले जीवनमा प्रेम गर्दै रहन सकौँ । हामीले प्रेम गरौँ वा नगरौँ यो त पछिको कुरा भयो । हामी जता जाउँ हामीलाई अरूले

प्रेम गरून्, हामीतिर आकर्षित होऊन्, हामीले अह्राउँदा आज्ञाको पालन गरून्। यो तब सम्भव हुन्छ जब हाम्रो आँखामा त्यो शक्ति र श्रद्धा आउँछ, यसप्रकारको साधनालाई सम्मोहन साधना वा सम्मोहन प्रयोग भनिन्छ ।

हिमालय चढ्न त दुई हजार मानिसले चढ्लान् । तर शिखरमा पुग्ने त दुईजना हुन्छन् । बाँकी तल फर्केर आउँछन् अथवा असफल हुन्छन् । तर जसले हिमालय चढ्नमा सफलता पाउँछ, उसलाई सम्पूर्ण विश्वले चिन्दछ । साधनाको क्षेत्रमा पनि सफलता प्राप्त गर्नेलाई विश्वले याद गर्दछ । एकपटक साधना गरेर सफलता मिलेन भने पनि दोस्रो, तेस्रो, चौथो, पाँचौँपटक पनि साधना गर्नुपर्ने हुन्छ । तब हामी सफल हुन्छौँ नै । यसमा संसारले तिमीलाई रोक्न सक्दैन किनकि म तिम्रो साथ छु ।

म पनि तिमीजस्तै शिष्य थिएँ, शिष्य मात्र होइन, एक संन्यासी थिएँ । म ठाउँ-ठाउँमा घुमेँ । मैले पनि एकजना संन्यासी भेटेँ– अत्यन्तै उच्च हुनुहुन्थ्यो, उच्चकोटिको हुनुहुन्थ्यो, वास्तवमा गुरु हुनुहुन्थ्यो । दीक्षा त मैले सच्चिदानन्दज्यूसँग धेरै पछि मात्र लिएको थिएँ र उहाँले मलाई जुन साधनाहरू प्रदान गर्नुभयो, साढे तीन वर्षसम्म त केही अनुभूति नै भएन । साधनामा सफलता प्राप्त भइरहेको छ कि छैन भन्ने थाहा पनि थिएन । अन्तमा मानसिकता यस्तो भइदियो कि अब सफलता मिल्न सक्तैन । बेकारमा समय मात्र बर्बाद भइरहेको छ । यसभन्दा त घर गएर अध्यापक बनूँ, जीवन त पार लागिहाल्ला, यी साधनाहरू गरेर केही हुनेवाला छैन, वास्तवमा त कुनै साधना हुँदै हुँदैन, सफलता प्राप्त नै हुँदैन । मैले उहाँलाई भनेँ यी साधनाहरूमा सफलता प्राप्त गर्नेछु भनेर मलाई पटक्कै विश्वास छैन ।

उहाँले मलाई भन्नुभयो कि त तिम्रो शरीर ढल्नेछ, समाप्त हुनेछ वा साधनामा सफलता प्राप्त गर्नेछौ । यी दुईमध्ये कुनै एउटा बाटोलाई नै रोज्नुपर्नेछ– कि त शरीर सिद्धिनेछ, मासु गलेर हड्डी मात्र बाँकी रहनेछ । मासु त भरिन सक्छ, त्यसको चिन्ता तिमी नगर । जबसम्म मासु गल्दैन तिमी साधना गर्दै गर । बिल्कुलै हड्डीको ढाँचा मात्र बाँकी नरहेसम्म साधना गर्दै रहू, साधनामा सिद्धि अवश्य प्राप्त हुन्छ र सिद्धि पाएपछि सारा संसारले तिमीलाई चिन्नेछ ।

त्यसको तीन-चार महिनापछि पहिलोपटक साधनामा सफलता प्राप्त भयो । तर पहिलोपटक साधनामा सफलता प्राप्तिपछाडि साढे तीन वर्षसम्म तनाव, द्वन्द्व इत्यादि धेरै कुरा मेरो मनमा रहेको थियो । जबसम्म मेरो र मेरा पूर्वजको कुनै दोष, छल कुनै प्रकारले रक्तमा रहेको थियो, त्यसबेलासम्म साधनामा केही विलम्ब हुन गयो । यसमा धैर्य, अत्यन्तै धैर्य र असीम धैर्यको आवश्यकता हुन्छ । तर एकपटक सफलता प्राप्त भएपछि दोस्रो, तेस्रो गरी पछिका साधनाहरूमा कुनै समस्या आउँदैन । फेरि हरेक महिनामा एक-दुईवटा साधनाहरूमा सफलता प्राप्त गरेँ ।

पुन: अरू संन्यासीकहाँ गएर साधना गर्दा त्यहाँ पनि चाँडै सफलता प्राप्त भयो । मेरो भनाइको अर्थ यो हो कि कैयौँपटक मानिसले बीचमा आएर साधनालाई छोडिदिन्छन् र कैयौँपटक यस्तो हुन्छ कि त्यो साधनाको सफलताको अन्ठान्नब्बे प्रतिशतमा हुन्छ र बीचमा कुनै यस्तो पापकर्म आउँछ र उसले साधना छोडिदिन्छ र सोच्दछ कि केही पनि हुँदैन, यी सबै छोडौँ । जबकि उसलाई अन्ठानब्बे प्रतिशत सफलता त प्राप्त भइसकेको हुन्छ र दुई प्रतिशत मात्र उसले अगाडि बढ्नु थियो र ऊ अगाडि बढ्न छोड्छ ।

त्यसैले यस कुरालाई हामीले हेक्का राख्नै पर्दछ कि यदि यो शरीर गलेमा पनि कुनै फिक्री छैन, शरीर त फेरि बन्नेछ– एक महिना, दुई महिनासम्म जब तिमीले राम्रोसँग भोजन गर्नेछौ । तर यदि तिमीले साधनालाई छोड्छौ भने त्यस साधनाको सफलता तिमीलाई प्राप्त हुन सक्दैन । परिवारमा पनि तिम्रो कुनै सम्मान हुँदैन । तिम्रो छिमेकमा कोही बस्छ । न तिमी उससँग परिचित छौ, न ऊ नै तिमीसित परिचित छ । तर एकजना संन्यासी विशुद्धानन्दज्यू हुनुहुन्छ जसको नाम तिमीलाई पनि थाहा छ, मलाई पनि थाहा छ । विवेकानन्द जन्मे, उनको नाम तिमीलाई पनि थाहा छ, मलाई पनि थाहा छ । म उनको जातिको होइन, गोत्रको पनि होइन, उनको र मेरो बीचमा कुनै नाता छैन– न भाइ, न आमा र बुबा ! तर यी सबैले आ-आफ्नो क्षेत्रमा सफलता हासिल गरेका थिए । बुद्ध आए, महावीर आए, कृष्ण आए, राम आए, नानक आए, ईसा-मसीह आए, जो आए पनि सफलता प्राप्त गरे । तब त सारा विश्वले उनीहरूलाई नियालिरहेको छ । आज २५०० वर्षपछि पनि हामीलाई थाहा छ कि शंकराचार्य आफैमा अद्वितीय व्यक्तित्व थिए वा शंकराचार्यजस्तो कोही हुन सक्दैन । तिमीजस्तो पनि कुनै व्यक्ति उत्पन्न भएको छैन । तिमी छौ, केवल तिमी छौ । यो तिम्रो जीवनको विशेषता हुनुपर्दछ । यसैले म तिमीलाई तैयार गर्दैछु तिमी आफैमा अद्वितीय बन, श्रेष्ठ बन । यी सारा प्रयास यसै कुराका लागि हुन् । म तिमीलाई आशीर्वाद दिन्छु तिमीलाई सफलता प्राप्त होस् ।

❑

# संस्कार रहस्य

माथिल्लो स्तरमा पुगेका योगीजन समाधिको अवस्थामा त्यसरी नै सूक्ष्म शरीरद्वारा भ्रमण गर्दछन्, जसरी लट्टाइमा बेरिएको धागो फुकाउँदा चङ्गा आकाशमा उड्दै जान्छ तथा जसरी धागो लट्टाइमा बेर्दा चङ्गा फेरि आफ्नै ठाउँमा आइपुग्दछ, त्यसरी नै सूक्ष्म शरीर पुन: आफ्नो ठाउँमा फर्केर आउँदछ । महाविदेहा बहि:कल्पिता वृत्ति भएका योगीहरू समाधिभन्दा भिन्न अवस्थामा पनि स्वेच्छानुसार सूक्ष्म जगत्मा सूक्ष्म शरीरद्वारा भ्रमण गर्न सक्दछन् ।

यो सूक्ष्म शरीरद्वारा नै चित्तमा जन्म, आयु तथा भोग दिने वासनाहरूको संस्कार (कर्माशय) एकत्रित रहन्छ । जसरी लट्टाइको धागो चुँडिएपछि चङ्गालाई अर्कै लट्टाइको धागोसँग जोडिन्छ र अनि त्यो चङ्गाको सम्बन्ध त्यसै लट्टाइसँग हुन जान्छ, त्यसरी नै मृत्युको समयमा हृदयरूप लट्टाइबाट प्राणरूप डोरी चुडिँदा सूक्ष्म-शरीररूप चङ्गा उड्दै आफ्नो समयअनुसार कुनै त्यस्तो गर्भमा पुग्दछ जहाँ उसका वासनाहरू (प्रधान कर्मविपाक) को पूर्ति गर्ने उसका समान संस्कारहरू हुन्छन् । त्यहाँ उसको हृदय ग्रन्थिरूप लट्टाइमा उसका प्राणहरूको गाँठो पर्दछ तथा यस शरीरसित पूर्ववत् कार्य हुन थाल्दछन् ।

यहाँ पुनर्जन्मको कारण संस्कारहरूका विषयमा पनि यसप्रकार बुझ्नुपर्छ– मनका वृत्तिरूप कर्महरू अनन्त छन्, जो समस्त जीवनमा भइ नै रहन्छन् (तिनीहरूलाई नै कर्माशय भन्दछन्) । तिनीहरूबाट उत्पन्न भएका संस्कारहरू पनि अनन्त छन्, जसद्वारा चित्त चित्रित रहन्छ । यी संस्कारहरू चित्तमा जन्म-जन्मान्तरदेखि संचित हुँदै आइरहेका हुन्छन् । जब कुनै कर्माशयका संस्कारहरू चित्तमा प्रबलरूपले उत्पन्न हुन्छन्, तब तिनलाई प्रधान कर्माशय भन्दछन् । जुन संस्कारहरू शिथिल रूपले रहन्छन्, तिनलाई उपसर्जन कर्माशय भन्दछन् । मृत्युको समयमा प्रधान कर्माशय पूरा वेगले जाग्दछन् तथा आफ्नै जस्ता सबै पूर्वजन्महरूका कर्माशयका संचित संस्कारहरूको अभिव्यञ्जक भएर तिनलाई जगाइदिन्छन् ।

यी कर्म तथा तिनका संस्कारहरू प्राय: चार प्रकारका हुन्छन्–

१. पापरूप कर्म अर्थात् हिंसा आदि अरूलाई हानि पुऱ्याउने चोरी, व्यभिचार आदि कर्म दुराचारी पुरुषका हुन्छन् ।

२. पुण्य कर्म अर्थात् अहिंसा आदि अरूलाई लाभ पुऱ्याउने स्वाध्याय, तपस्या आदि कर्म महात्माहरूका हुन्छन् ।

३. पाप-पुण्यमिश्रित कर्म अर्थात् जसबाट कसैलाई हानि तथा कसैलाई लाभ होओस्, यस्ता कर्म साधारण मनुष्यका हुन्छन् ।

४. पाप-पुण्यरहित अर्थात् फलको वासनारहित निष्काम शुद्धकर्म । यस्ता कर्म योगीहरूका हुन्छन् । साधारण मनुष्यसरह उनीहरूलाई कर्ममा डोऱ्याउने अविद्या आदि क्लेश हुँदैन, बरू उनीहरू आफू र आफ्ना सब कर्म तथा तिनका फलहरूलाई समेत ईश्वरमा समर्पण गरेर केवल उनको आज्ञापालन आफ्नो कर्तव्य ठानेर कर्म गर्दछन्, यसकारण तिनीहरू वासनारहित हुन्छन् । श्रीमदभगवद्गीतामा भनिएको छ–

ब्रह्मण्याधाय कर्माणि सङ्गं त्यक्त्वा करोति य: ।
लिप्यते न स पापेन पद्मपत्रमिवाम्भसा ॥ (५।१०)

योगीहरूबाहेक सकामी पुरुष फलहरूको वासनाले उपर्युक्त तीन प्रकारका कर्म गर्दछन् । जस्ता कर्म हुन्छन् त्यस्तै फलको अनुकूल गुण भएका वासनाहरू उत्पन्न हुन्छन् । ती वासनाहरूबाट पुन: त्यसै प्रकारका वासनाहरूको सृजना हुन्छ । संस्कारहरूअनुसार चित्तमा दुई प्रकारका वासना हुन्छन् । पहिलो– स्मृति-फलवाला र दोस्रो– जाति, आयु र भोगका । जब कोही कर्म गर्दछ तब कर्मको फलको अनुकूल नै सबै वासनाहरू प्रकट हुन्छन् । उदाहरणार्थ– जब कर्मको फलअनुसार मनुष्यजन्म हुन्छ, तब स्मृतिफलवाला वासनाहरूका मनुष्य जाति, आयु तथा भोगका वासनाहरूलाई जो जन्म-जन्मान्तरदेखि चित्तमा संस्काररूपले रहेका हुन्छन्, जगाइदिन्छन् । यसभन्दा भिन्न अन्य जाति, आयु तथा भोगका वासनाहरू चित्तभूमिमा दबेर रहन्छन् । यसैप्रकार यदि कर्महरूका फल (कर्मविपाक) कुनै पशुयोनि छ भने त्यसले त्यस जाति, आयु तथा भोगका स्मृतिफलका वासनाहरू जगाइदिन्छ र ती आफ्ना फल दिन थाल्दछन् । पहिले नै भनिसकिएको छ– यो संस्कार चित्तमा जन्म-जन्मान्तरदेखि संचित हुँदै आइरहेको हुन्छ । जब कुनै कर्माशयहरूका संस्कार चित्तमा प्रबलरूपले उत्पन्न हुन्छन्, तब तिनलाई प्रधान भन्दछन् । जो शिथिल रूपमा रहन्छन्, तिनलाई उपसर्जन भन्दछन् । मृत्युको समयमा प्रधान कर्माशय पूरा वेगले जाग्दछन् तथा आफैजस्ता सबै पूर्वजन्महरूका कर्माशयका संचित संस्कारहरूका अभिव्यञ्जक (प्रकट गर्ने) भएर तिनलाई जगाइदिन्छन् । यी सब संस्कारहरूअनुसार नै पछिल्लो जन्म देवता, मनुष्य, पशुपंछी आदि जातिमा हुन्छ, जसमा ती कर्माशयहरूको फल भोग्न सकियोस्, तथा त्यति नै आयु दिइन्छ जसमा निश्चित भोग पूरा हुन सकोस् । तिनै कर्माशयहरूको अनुकूल तिनीहरूको भोग नियत हुन्छ । यस प्रधान कर्माशयद्वारा जुन पछिल्लो जन्म, आयु तथा भोग नियत भएको छ, त्यसलाई नियत कर्म विपाक भन्दछन्, तथा उपसर्जन-कर्माशय जो पछिल्लो जुनीमा भोग्नु छ तर अहिले त्यसको फल नियत भएको छैन, त्यसलाई अनियत विपाक भन्दछन् । यी उपसर्जन कर्माशयहरूको गति, जो दबेर रहेका छन् र जसको फल अहिले नियत भएको छैन, अर्थात् जो अनियत विपाकवाला छन्, ती तीन प्रकारका छन्–

१. कि त तिनीहरू परिपक्व नभइकन नै नियत विपाकलाई केही कम (दुर्बल) पारेर स्वयं नष्ट हुन्छन्, (यसबाट यो ठान्नु हुँदैन– तिनीहरू कुनै फल नदिइकनै नष्ट भएर गए, अपितु तिनीहरूले नियत विपाकलाई कम गरेर अर्थात् दुर्बल पारेर आफ्नो फल दिइसके तथा नियत विपाकले तिनीहरूलाई नष्ट पार्नमा त्यस अंशसम्म आफ्नो फल दिइसक्यो भन्ने ठान्नुपर्छ ।)

२. कि त तिनीहरू नियत विपाकसँगै रहन्छन् र बेला-बेलामा मौका पाएर आफ्नो फल दिइरहन्छन्,

३. अथवा तिनीहरू त्यस बेलासम्म चित्तभूमिमा त्यसै दबेर बसिरहन्छन् जबसम्म कुनै जन्ममा उनीहरूलाई फल दिने अवसर प्राप्त हुँदैन । जुन बेला तिनीलाई जगाउने कर्माशय प्रधान हुन्छन्, त्यसबेला प्रकट भएर तिनीहरू आफ्नो फल दिनको लागि जाग्दछन् ।

यहाँ यो पनि थाहा पाउनु आवश्यक छ– अवस्था भेदअनुसार कर्महरूलाई तीन भागमा विभाजन गरिएको छ– संचित, प्रारब्ध र क्रियमाण ।

जुन कर्म अनन्त जन्महरूमा गरिएका छन् र अझसम्म तिनको भोग भोग्ने पालो आएको छैन, किन्तु केवल संस्कारका रूपमा कर्माशयमा छन्, तिनलाई संचित कर्म भन्दछन् ।

कर्माशयमा भरिएर रहेका अनन्त कर्महरूद्वारा जुन केही मात्र कर्महरूले शरीररूप फलको उत्पत्ति गरेको छ, अर्थात्, जसको फल यस जन्ममा प्राप्त भइरहेको छ, तिनलाई प्रारब्ध भन्दछन् ।

जुन नवीन कर्महरूको संङ्ग्रह गरिन्छ, अर्थात् नवीन इच्छाद्वारा जुन नवीन कर्मले नवीन संस्कार उत्पन्न गर्दै जान्छन्, तिनीहरू क्रियमाण भनिन्छन् ।

कोही भन्न सक्छ– मनुष्य मनुष्ययोनिभन्दा तल पशुयोनिमा पुग्नु विकासवादको विरुद्ध छ । प्रायः मनुष्यको जन्म मनुष्यमा नै हुन्छ; तर पशुपक्षी आदि नीच योनिहरूका विशेष विशेष अवस्थामा उसले आफ्नै कल्याणार्थ जानु पर्दछ । मनुष्ययोनि कर्म तथा भोग दुवैको योनि हो, यसमा संस्कारहरू बन्दछन् र मेटिन्छन् पनि । अन्य जो भोगयोनिहरू छन्, तिनमा नवीन संस्कारहरू बन्दैनन्, अपितु तिनीहरूको निवृत्ति हुन्छ ।

कर्मसिद्धान्त ज्यादै गहन छ, स्थूल बुद्धिले बुझ्न सकिँदैन, एकाग्र सूक्ष्म बुद्धिद्वारा मात्र बुझ्न सकिन्छ । यस कर्मसिद्धान्तको सार हो– कुनै कर्म पनि कसैलाई दुःख दिने विचारले नगर्नु । किनभने, वास्तवमा कसैले कसैलाई न दुःख दिन सक्दछ, न सुख । जसले जे जस्तो पाउनु छ उसले त्यो अवश्य पाउनेछ । मनुष्यले अरूलाई सुख, दुःख दिने नियतले कर्म गरेर आफूभित्र सुख, दुःख पाउने कर्माशय एकत्र गर्दछ । ईश्वरीय नियमहरूद्वारा त उसलाई सदैव खराब कर्महरूदेखि पर रहने प्रेरणा भइ नै रहन्छ । मासु, रगत आदि देख्दा मनुष्यलाई स्वाभाविक ग्लानि हुन्छ, अरूको दुःख देखेर मुटु हल्लन्छ र पीडित हुन्छ तर हिंसा आदि मलको आवरणद्वारा हृदय छोपिनाले ईश्वरको यो आवाज सुनिँदैन । अस्तु ।

(खप्तडबाबाकृत धर्म विज्ञान, तृतीय खण्ड, पृष्ठ १८४-१८८)

# मन्त्रका दस संस्कार

कुनै पनि मन्त्र छिन्न, रुद्ध, शक्तिहीन, पराङ्मुख आदि पचास दोषहरूबाट मुक्त हुन सक्दैन । सप्तकोटि मन्त्र छन्– यिनीहरू सबै यी दोषहरूमध्ये कुनै न कुनैबाट अछुतो रहेको पाइन्न । यी दोषहरूको निवृत्तिका लागि निम्नलिखित दस संस्कारलाई सम्पन्न गर्नुपर्ने हुन्छ– जनन, दीपन, बोधन, ताडन, अभिषेक, विमलीकरण, जीवन, तर्पण, गोपन र आप्यायन ।

जसले यी दोषहरूलाई नबुझिकन मन्त्र जप गर्दछ उसलाई सिद्धि प्राप्त हुँदैन ।

दोषानिमानविज्ञाय यो मन्त्रान् भजते जडः ।
सिद्धिर्न जायते तस्य कल्पकोटिशतैरपि ॥

१. भोजपत्रमा गोरोचन, कुंकुम, चन्दन आदिले आत्माभिमुख त्रिकोण लेखेर तीनै कोणहरूमा छ-छवटा समान रेखा खिचौँ । यस्तो गर्नाले उनान्चासवटा त्रिकोण बन्न जान्छन् । यसमा ईशानकोणबाट मातृकावर्ण लेखेर देवताको आवाहन-पूजन गरेर मन्त्रको एक-एक वर्णलाई उद्धार गरेर अलग पत्रमा लेखौँ । यस्तो गर्नाले 'जनन' नामक प्रथम संस्कार सम्पन्न हुन्छ ।

२. हंसमन्त्रलाई सम्पुट गर्नाले एक हजार जपद्वारा मन्त्रको दोस्रो 'दीपन' संस्कार सम्पन्न हुन्छ । यथा– 'हंसः रामाय नमः सोऽहम् ।'

३. हूँ-बीज-सम्पुटित मन्त्रलाई पाँचहजार पटक जप गर्नाले 'बोधन' नामक तेस्रो संस्कार सम्पन्न हुन्छ । यथा– 'हूँ रामाय नमः हूँ ।'

४. फट्-सम्पुटित मन्त्रलाई एकहजार पटक जप गर्नाले 'ताडन' नामक चतुर्थ संस्कार सम्पन्न हुन्छ । यथा– 'फट् रामाय नमः फट् ।'

५. भूर्जपत्रमा मन्त्र लेखेर 'रों हंसः ओं' मन्त्रले अभिमन्त्रित गरेर एक हजार पटक जपेको जलबाट अश्वत्थपत्रादिद्वारा मन्त्रलाई अभिषेक गरौँ । यस्तो गर्नाले 'अभिषेक' नामक पाँचौँ संस्कार सम्पन्न हुन्छ ।

६. 'ओं त्रों वषट्' यी वर्णहरूबाट सम्पुटित मन्त्रको एकहजार पटक जप गर्नाले 'विमलीकरण' नामक छैटौँ संस्कार सम्पन्न हुन्छ । यथा– 'ओं त्रों वषट् रामाय नमः वषट् त्रों ओं ।'

७. स्वधा-वषट्-सम्पुटित मूलमन्त्रलाई एकहजार पटक जप गर्दा 'जीवन' नामक सातौँ संस्कार सम्पन्न हुन्छ । यथा– 'स्वधा वषट् रामाय नमः वषट् स्वधा ।'

८. दूध, जल, घिउबाट मूलमन्त्रद्वारा एक सयपटक तर्पण गर्नु नै 'तर्पण' संस्कार हो ।

९. ह्रीं-बीज-सम्पुटित मन्त्रलाई एकहजार पटक जप गर्नाले 'गोपन' नामक नवौँ संस्कार सम्पन्न हुन्छ । यथा– 'ह्रीं रामाय नमः ह्रीं ।'

१०. ह्रौं-बीज-सम्पुटित मन्त्रलाई एकहजार पटक जप गर्नाले 'आप्यायन' नामक दसौँ संस्कार सम्पन्न हुन्छ । यथा– 'ह्रौं रामाय नमः ह्रौं ।' यसप्रकारले संस्कृत गरिएको मन्त्र शीघ्र सिद्धिप्रद हुन्छ । (स्रोतः कल्याण)

# 'गोरक्ष निखिल वाणी'ले दिएको योगदान

डा. स्वामी प्रपन्नाचार्य

तन्त्रसम्बन्धी एकमात्र खोजपूर्ण पत्रिका '**गोरक्ष निखिल वाणी**' हो भन्दा अत्युक्ति नहोला । जस्तै इतिहाससम्बन्धी एकमात्र खोजपूर्ण पत्रिका 'पूर्णिमा' देखिन्छ । त्यस्तै ऐलेसम्म नेपालमा पूर्व-मेचीदेखि महाकालीसम्म, हिमालदेखि तराईसम्मका नेपाली राष्ट्रभाषा माध्यम तथा देवनागरीक अक्षरमा कुँदिएका सयकडौं पत्रिकाहरू छन् । साहित्य नाटक पद्यमा लिखित खण्डकाव्य, महाकाव्य, व्याकरण, ज्योतिष, भाषाविज्ञान आदि समग्रमा पत्रपत्रिकाहरू पाक्षिक, मासिक, द्वैमासिक, त्रैमासिक, षाण्मासिक, वार्षिक पत्रिकाहरू प्रकाशित नभएका होइनन् तर इतिहास र तन्त्रविषयमा पत्रिकाहरू शून्य नै भने पनि फरक नपर्ला । स्व. पं. नयनराज पन्त र उहाँका सहयोगी शिष्यहरूद्वारा सहयोग पाएर शुद्ध निख्खर इतिहाससम्बन्धी खोजपूर्ण 'पूर्णिमा' पत्रिकाले ठूलो भुइँचालो ल्यायो ऐतिहासिक जगत्मा । तर पूर्णिमाले ऐलेसम्म पनि एक्लै हिम्मत बाँधेर अथाह अगाध समुद्र पार गरिसकेको छ ।

ठीक त्यस्तै एक्काइसौं शताब्दीको रफ्तारमा सम्मोहन विद्याका अन्तिम आचार्य डा. नारायण दत्त श्रीमालीको जीवनकालसम्म छिमेकी भारतमा ठाउँ-ठाउँमा समय-समयमा दर्शन भेट हुने गर्थ्यो । भारतमा डा. नारायण दत्त श्रीमालीज्यूको खूब प्रचार थियो । श्रीमालीज्यू सम्मोहन विद्या (हिप्नोटिज्म), ज्योतिषविद्या तथा तन्त्रविद्याका पारङ्गत हुनुहुन्थ्यो । उपर्युक्त विद्या प्राप्त गर्नलाई उहाँले ठूलो तपस्या गरेर अन्तर्ज्योति बाल्नुभयो र श्रीमालीज्यू हराउनुहुन्थ्यो अरू अधिकारी जिज्ञासु शिष्यहरूलाई 'म हराएँ तिमी पनि हराऊ' भन्ने गर्नुहुन्थ्यो र यो सत्य कुरा हो । 'अपने आप खोजने पर ही दूसरों को खोजने का उपदेश दे सकता है' ऊर्दूको शायरीले भन्छ–

यह वह दर है जहां सर झुकाया जाता है ॥
खुदी को मिटा कर खुदा से मिलाया जाता है ॥

'म हराएँ तिमी पनि हराऊ' तब हुन सक्छ । तर यी सबै उहाँको जीवनकालमा नेपालमा खास प्रचार भएको कलमीलाई थाहा छैन । अहिले कलमी जीवनको सत्तासी वसन्तसँग मित लगाउँदैछ ।

परन्तु केही वर्षपूर्व अर्थात् ६, ७ वर्ष पूर्व अचानक **'गोरक्ष निखिल वाणी'** पत्रिकाकारमा हात लागेपछि नेपालमा पनि डा. नारायणदत्त श्रीमालीज्यूको प्रचार हुँदैरहेछ भन्ने भान भयो । तदनन्तर समय-समयमा **'गोरक्ष निखिल वाणी'** प्राप्त भइरहेकै छ । साथै पत्रिकाको भाषा, प्रामाणिकता, आजको समाजलाई उपयोगी हुने नहुने आदि विषयहरूमा चिन्तन, मनन, निदिध्यासन अवसर जुर्दै गयो । विचारमा भुत्रि सर्धाको पराक पऱ्यो । दैवसंयोगले कलमीलाई प्राप्त भएको अङ्कहरूले यथेच्छ सन्तोष दिलायो । यस पत्रिकाको आकर्षण केन्द्र बुझ्ने पाठकहरूलाई 'तन्त्र' नै हो । साथै विश्वको एक मात्र तन्त्रशास्त्रहरूको घर नेपालमा 'तन्त्र' विषयक पत्रिका **'गोरक्ष निखिल वाणी'** नै हो भन्दा सन्देह गर्ने अवसर छैन । यो पत्रिकाको नाम जुराउँदा नेपाल राष्ट्रको एकीकरण गर्ने पृथ्वीनारायण शाहका इष्टदेव सिद्ध गोरक्षनाथ तथा निखिलेश्वरानन्द (डा. नारायण दत्त श्रीमालीज्यू) को संन्यस्त नामावलीमा जुराइएको बुझिन्छ ।

**'गोरक्ष निखिल वाणी'**को कैयौं अङ्कहरूमा तन्त्रसम्बन्धी जानकारी दिएर पाठकलाई कृतार्थ पारेको छ भने नेपालका देवीदेवता तथा तीर्थस्थानहरूको यथोचित अनुसन्धान गरेर पाठक वाचकवृन्दको मन, मस्तिष्कलाई खुराक पुऱ्याएको छ । तन्त्र, मन्त्र, यन्त्र उपासना, गायत्री उपासना, सूर्योपासना आदि प्रचुर मात्रामा संग्रह गर्न योग्य सामग्री संकलन गरेर **'गोरक्ष निखिल वाणी'**ले पाठकवृन्दलाई धेरै ठूलो उपकार गरेको छ भन्ने कलमीलाई अनुभव भइराखेको छ । आफ्नो क्षेत्रमा **'गोरक्ष निखिल वाणी'**ले अतुलनीय कार्य गरिराखेको छ । यस पत्रिका खुलारूपमा नेपाल र नेपाली जनताको मस्तिस्कमा गहिरो भिजोस् । **'गोरक्ष निखिल वाणी'**पत्रिकाको माध्यमबाट नेपालको पुस्तकालय, संग्रहालय, व्यक्तिगत पुस्तकालय तथा व्यक्ति-व्यक्तिका घर, कटेरा, खोपा, बाक्सा आदिका पोका, कुम्ला, पछेउरा आदिमा रहेको लेख रचना, तन्त्र, ग्रन्थहरूको हस्तलेख, पाण्डुलिपी आदिको पनि निकट भविष्यमा जानकारी पाठक वाचकवृन्दले पाउन सके अझ **'गोरक्ष निखिल वाणी'**मा निख्खर, तिख्खरपना आउने थियो ।

**'गोरक्ष निखिल वाणी'**ले ऐलेसम्म निरन्तर नेपाली पाठकवृन्दलाई धेरै ज्ञान दिँदै आएको छ भने विविध विषयक ज्ञान गराउँदै आएको कुरा पाठकवृन्दले बिर्सनु हुँदैन । केवल यति मात्र होइन अपितु **'गोरक्ष निखिल वाणी'**ले नेपाली भाषाको पत्रिका जगत्मा आफ्नो कार्यक्षेत्रमा विशिष्ट स्थान ओगटेको छ । नेपाली भाषालाई पनि यसले धनी तुल्याएको छ । यसमा ननु नच गर्ने ठाउँ छैन ।

त्यसैले वर्तमान समयमा प्रचलित पत्रिकाहरूमा **'गोरक्ष निखिल वाणी'**को

विशिष्ट स्थान छ र हुनै पर्छ पनि । धार्मिक, आध्यात्मिक, साँस्कृतिक, तान्त्रिक, ज्योतिष, ऐतिहासिक आदि अनेक विधाहरूले सुसज्जित हुनुका साथै सम्पादन कला पनि विशिष्टि र आफ्नै ढङ्गको छ भने राम्रो कागज, रङ्गीन छपाई, स्पष्ट छपाइ आदि यस पत्रिकाको आफ्नै विशेषता रहेको छ । यस पत्रिकाले असल भएर असल पाठक वाचकवृन्दको क्षेत्रफल र भूमिका तैयार पार्दै आइरहेको कलमीले अनुभव गरिरहेको छ । भविष्यमा पनि **'गोरक्ष निखिल वाणी'**ले गोरक्ष राष्ट्र नेपालको यसै माध्यमले सेवा र टेवा पुऱ्याउँदै गयो भने तन्त्र साहित्यको अभूतपूर्व इतिहास बन्नेछ ।

त्यसैले पनि पत्रपत्रिका भनेको इतिहासको जननी हो । आठ अरब जनसंख्या भएको विश्वमा इतिहास लेख्नु पर्दा इतिहासकारहरूले आफ्ना परिश्रमको दु:खेसो पोखेको भूमिका हेर्दा छर्लङ्ग हुन्छ । भूर्जपत्र, स्वर्णपत्र, ताम्रपत्र, त्रिशूल, घण्टा, घण्टी, भाँडा, कटौरा आदिमा लेखिएका लेखहरूबाहेक शिलालेख, मूर्तिलेख, पान्नौलालेख आदिबाहेक सबैभन्दा धेरै र प्रामाणिक तात्कालिक पत्रपत्रिका, पम्पलेट, मुचुल्का, वादि, प्रतिवादी, रुक्कापत्र, सनदपत्र, लालमोहर आदि प्रमाणिक इतिहास लेख्ने साधन सामग्री हुन् । त्यसमा धेरै प्रयोग इतिहासकारहरूले तात्कालिक पत्रपत्रिकाकै उपयोग गरेको देखिन्छ । त्यसैले **'गोरक्ष निखिल वाणी'**पनि भविष्यको इतिहासको जननी बनिसकेको छ भने वर्तमान पाठकवृन्दलाई विविध विषयक ज्ञानवर्द्धक सामग्री उपलब्ध गरेर राष्ट्रसेवा, समाजसेवा, पाठकवृन्दसेवा, नेपाली भाषाको सेवा, नेपाली साहित्य विधाको सेवा पुऱ्याएका हुनाले **'गोरक्ष निखिल वाणी'** स्वयं भूत र भविष्य जोड्ने वर्तमान इतिहास बनेको छ । यो इतिहास इतिहासकै रूपमा रहोस् । साथै केही सुझाव पनि दिने कलमीको विचार भयो । त्यो के भने–

१) १४ प्वाइन्टभन्दा सानो अक्षर नछपाउने किनभने धेरै पाठक पाठिकाको आँखा ज्यादै मधुर हुन्छन् । धेरै पाठकगण वृद्ध हुन्छन् ।

२) दोस्रो सुझाव कालो, निलो आदि रङ्गीन कागजमा लेख सामग्री छापिए भने वृद्ध तथा आँखा कमजोर भएका पाठकवृन्दले लेख सामग्री पढ्न सक्तैनन् । त्यसैले पाठकवृन्द खिन्न हुन्छन् । कलमीले पत्रिकाको प्रशंसा धेरै पाठकवृन्दको मुखबाट सुनेको छ । तर उनीहरूको दु:खेसो उछिटो यही छ कि रङ्गीन कागजमा सामग्री किन छापेको ? रङ्गीन युवा-युवती पाठकलाई राम्रै छ पनि तर राम्रो पत्रिकाको पाठक त जवान, वृद्ध, विद्वान्, साहित्यकार सालेखाले सबैखाले हुन्छन् ।

उपर्युक्त दु:खेसोहरू परिमार्जन भए केही पाठकवृन्दलाई सुविधा हुनेछ । तर सम्पादक मण्डल र व्यवस्थापन समिति तथा बजार व्यवस्था समिति आदिका अनुकूल प्रतिकूलताप्रति पनि ध्यान बढाउनै पर्ने हुन्छ । तैपनि पाठक वाचकवृन्दले आफ्ना असुविधाप्रति दु:खेसो पोख्ने नै गर्छ । अतएव कलमीले यो उछिटो उछिट्याएको हो ।

शेष **'गोरक्ष निखिल वाणी'**ले तन्त्र, योग, आयुर्वेद, धर्म, संस्कृति, भाषा, देश, काल, पत्र, परिस्थितिको अनुकूल भएर राष्ट्र समाज र आफ्नो तन्त्र विधामा विशेष सेवा पुऱ्याएकोमा साधुवाद धन्यवाद असलवाद दिनैपर्छ । आफ्नो समयको उपलब्धिमा ज्यादै सुन्दर तथा उपयोगी पत्रिका **'गोरक्ष निखिल वाणी'** प्रशंसित उत्तम पत्रिकाहरूमा अन्यतम रहेको छ ।

**ॐ असतो मा सद्गमय**
**तमसो मा ज्योतिर्गमय**
**मृत्योर्मा अमृतं गमय**
**शान्ति शान्ति शान्ति ।**

# आमाको संस्कारको प्रभाव बालकहरूमा

'आमा' शब्द मात्र होइन, जीवन्त संवेदनाहरूको प्रतीक पनि हो । 'आमा'– यस पावन सम्बोधनबाट मात्र नारीको पूर्णता सिद्ध हुन्छ । यस पवित्र ध्वनिको उच्चारण मात्रले मन अद्‌भुत शान्ति, पवित्रता र श्रद्धाको दिव्य भावहरूबाट परिपूर्ण हुन जान्छ । आमाले बालकलाई आफ्नो दूध खुवाएर पोषित मात्र गर्दिनन्, उनीसँग भएको सर्वश्रेष्ठ चीज आफ्नो बालकमा समाहित गर्दछिन् । आमाको संस्कार र परिवेशले सन्तानमा कति प्रभाव पार्दछ भन्ने सन्दर्भमा केही महापुरुषहरूको जीवन्त प्रसङ्ग प्रस्तुत छ–

**छत्रपति शिवाजी**

छत्रपति शिवाजी महाराज शाह भोंसले र वीरमाता जीजाबाईका सन्तान

थिए । शाह भोंसले बीजापुरका नवाबको अधीनमा जागिरे थिए । यो कुरा जीजाबाईको मनोनुकूल थिएन । हिन्दु धर्मसंस्कारको सम्यक् निर्वाह हुन सक्ने किसिमको उनी स्वयंको हिन्दु राज्य चाहन्थिन् किनकि नवाबको अधीनमा यस्तो सम्भव थिएन । यसका लागि जीजाबाईले महाराष्ट्रका अधिष्ठात्री देवी शिवा भवानीको आराधना गरिन्, फलस्वरूप उनीलाई शिवाजीजस्तो पुत्र प्राप्त भयो ।

माता जीजाबाईले बालक शिवालाई सानैदेखि रामायण र महाभारतका कथा तथा महापुरुषहरूको चरित्र सुनाउने गर्थिन् । उनी बालकलाई हिन्दु धर्ममाथि आएको संकट र त्यसको समाधानको शिक्षा पनि दिन्थिन् । आमाद्वारा दिइएका ती शिक्षाहरू नै शिवाजीमा संस्कारको रूपमा विकसित भए । तिनको प्रभाव यो भयो कि बालककालमै शिवाजीले गाईलाई लिएर हिँडिरहेका कसाईको हात काटेर मुगल साम्राज्यलाई नै चुनौति दिएका थिए । पछि गएर यिनै शिवाजी महाराजले मुगल सम्राट् औरंगजेबलाई आच्छुआच्छु पारेका थिए । उनका अफजल खाँ र शाइस्ता खाँजस्ता सेनापतिको शिवाजीले पराजित गरिदिए । माता जीजाबाईको इच्छाअनुरूप नै यिनले महाराष्ट्रमा हिन्दु साम्राज्यको स्थापना गरे । शिवाजी माता जीजाबाईलाई अत्यन्तै आदर गर्दथे र हरेक नारीमा आफ्नै आमाको नै छायाँ देख्थे । त्यसैले त युद्धमा समातिएकी गौहरबानू नामक महिलालाई उनले 'आमा' भनेर सम्बोधन गरे र आदर सम्मानका साथ उनको परिवारजनका साथमा पठाइदिए ।

### महात्मा गान्धी

भारतका राष्ट्रपिता र बापू सम्बोधनबाट विख्यात् गान्धी करमचन्द गान्धी र पुतलीबाईका सन्तान थिए । यिनकी माता पुतलीबाई अत्यन्त धार्मिक महिला थिइन् । गान्धीले आफ्नो आत्मकथा 'सत्य के प्रयोग' मा आफ्नी आमाको बारेमा लेखेका छन् कि उनी सूर्यनारायणलाई अर्घ्य नदिइकन अन्नजल ग्रहण गर्दिनथिन् । वर्षा ऋतुमा प्राय: यस्तो पनि हुन्थ्यो कि कैयौं कैयौं दिनसम्म सूर्यको दर्शन पनि हुँदैनथ्यो । यस्तो स्थितिमा पनि माता पुतलीबाईको व्रत चलिरहन्थ्यो । यस्ती आमाको छोरा भएकोले गान्धीमा परम वैष्णवको गुण हुनु स्वाभाविक थियो ।

जब गान्धी वकालत पढ्नका लागि बेलायत जान लागे तब माता पुतलीबाई अत्यन्तै चिन्तित भइन् । उनको चिन्ताको कारण आर्थिक थिएन । उनलाई यो थाहा थियो कि बेलायतमा मानिसहरू मासु र रक्सी पिउँछन् । अत: उनले गान्धीलाई बेलायतमा कहिले पनि मासु, रक्सीको सेवन गर्ने छैन भन्ने किरिया खान लगाइन् । गान्धीले वचन दिए र आजीवन त्यसलाई निभाए । यसप्रकार गान्धीको संस्कार निर्माणमा उनकी माता पुतलीबाईको ठूलो योगदान थियो ।

### अब्राहन लिंकन

अब्राहम लिंकन अमेरिकाका सबैभन्दा चर्चित राष्ट्रपतिहरूमध्ये एक हुन् । उनले अमेरिकालाई लामो गृहयुद्धबाट मुक्ति दिलाए तथा दासप्रथाजस्तो अमानवीय प्रथाको अन्त गरे । लिंकनको बालककाल ठूलो अभावमा बितेको थियो, उनलाई पढ्ने, लेख्ने आदिको कुनै व्यवस्था थिएन । तर उनकी आमा निकै अध्यवसायी थिइन् । उनी आफ्नो पुत्रलाई महान् व्यक्ति बनाउन चाहन्थिन् । उनी राति भोजन गरेपछि चुल्होमा बचेका कोइलाबाट लिंकनलाई भुइँमा लेख्न सिकाउँथिन् । आमाको मेहनतले सफलता पायो । उनको गृहशिक्षामा लिंकनले पढ्न, लेख्न सिके । यसप्रकार आमाले लिंकनलाई अध्ययनप्रियताको संस्कार दिलाइन् ।

एकपटक लिंकनलाई थाहा भयो कि छिमेकमा बस्ने एकजना धनी व्यक्तिसँग जर्ज वाशिंगटनको जीवनी छ । जर्ज वाशिंगटन अमेरिकाका पहिलो राष्ट्रपति हुन् । लिंकनले त्यस व्यक्तिकहाँ चार दिन मजदूरी गरेर बदलामा त्यस पुस्तकलाई प्राप्त गरे । उनले वाशिंगटनको जीवनीलाई कैयौंपटक पढे र वाशिंगटनजस्तै बन्ने निश्चय गरे । अभावमा जीवन बिताए पनि उनले कानून पढे । उनी राति सडकबत्तीको उज्यालोमा पढ्ने गर्दथे । कानुनविद् बनेपछि उनले नीग्रोहरूको दयनीय दशा देखेर उनीहरूको हित र अधिकारको लागि संघर्ष गरे । अन्तमा उनी अमेरिकाको राष्ट्रपति बने र उनकी आमाको उनलाई महान् व्यक्ति बनाउने सपना पूरा भयो ।

# सोह्र संस्कारको उपादेयता

पहिले-पहिले यो धर्ती अनेकौं ज्ञानवान् महापुरुषहरूले भरिएको थियो । जताततै यज्ञ, हवनको सुगन्धित धूवाँले वायुमण्डल व्याप्त रहन्थ्यो । वेदमंत्र, देवमंत्र पाठ, ध्यान, साधना, तपस्या आदि दैवी कर्महरूले व्यक्ति सदैव चैतन्य रहन्थे । तर आजभोलि जताततै विकृति नै विकृति भरिएको छ । आजको यो विनाशकालीन समय र ऋषिकालीन समयको अन्तर साँच्चै नै काहालीलाग्दो छ । यसप्रकारको परिस्थिति सृजना हुनुमा आचार-विचार, रहनसहन, आहार-विहारलगायत अर्को एउटा प्रमुख कुराले महत्त्वपूर्ण भूमिका निभाएको छ, त्यो हो– 'संस्कार' ।

'संस्कार' भन्नाले स्पर्शद्वारा आकार दिने प्रक्रियालाई बुझाइएको छ अर्थात् एउटा बीजलाई आन्तरिक वा बाह्य स्पर्शद्वारा पूर्णतामा पुऱ्याउने प्रक्रिया संस्कार हो । संस्कारको तात्पर्य हो शुद्ध आकार अर्थात् सम्पूर्ण जीवनकालमा कहीं कतैबाट पनि अशुद्धताको स्थिति बन्दै नबनोस्... उच्च विचार, उच्च ज्ञान, चेतनाद्वारा जीव भरि पूर्ण रहोस्...। यही संस्कार शब्दबाट नै त संस्कृति शब्द बनेको हो । स्थान विशेषमा रहने व्यक्तिहरूको भिन्नाभिन्नै संस्कार हुनाले नै विभिन्न संस्कृतिको जन्म भएको हो । हाम्रो संस्कृतिलाई आर्य संस्कृति भनिन्छ । यो वेदोक्त संस्कृतिमा कसरी पुरुषबाट पुरुषोत्तम बन्ने भन्ने सबै क्रिया पद्धतिहरू उल्लिखित छन् । अविरलरूपबाट अगाडि बढिरहने क्रिया नै संस्कार हो ।

अङ्गिरा ऋषि भन्नुहुन्छ, 'जसरी अनेकौं प्रकारका रङ्गहरूको मिश्रणबाट चित्रकारले सुन्दर चित्र निर्माण गर्न सक्षम हुन्छ त्यसैगरी विधिपूर्वक मानव शरीरमा प्रदान गरिने विविध संस्कारहरूले मानवलाई ब्रह्म बनाउँदछ ।'

बिनासंस्कारको मानव पशुतुल्य हुन्छ । यिनै संस्कारहरूको अभावमा आज प्रत्येक मानव अपूर्ण छ । उसबाट उत्पन्न बालक अपूर्ण छ, यो समाज, देश, राष्ट्र र विश्व अपूर्ण नै अपूर्णबाट भरिएर झन् जटिल बन्न पुगेको छ । जहाँ अपूर्णता छ त्यहाँ शान्तिको, आनन्दको र भित्री हृदयले खोजेजस्तो वातावरण प्राप्त हुनै सक्दैन... ।

प्राचीन समयमा मातापिता दुवै साधनात्मक उच्चता प्राप्त तपस्वी, तपस्विनीहरू हुन्थे । उनीहरूले आफ्ना गुरुजनमार्फत दिव्य संस्कारहरू प्राप्त गर्दथे । मातापिता दुवै संस्कारवान् हुनाले उनीहरूबाट उत्पन्न सन्तान पनि दैवी गुणसम्पन्न हुन्थे जसले मातापितालगायत कुलको नाम उज्ज्वल गर्ने खालका प्रशस्त सत्कार्यहरू गर्दथे । आज मानवले ध्यान, साधना, तपस्याजस्ता आध्यात्मिक विषयहरूलाई पन्छाई केवल एकोहोरो भौतिक जीवनलाई नै पूर्ण ठान्दै अगाडि बढिरहेकोले उनीहरूमाझ संस्कार स्थापन गर्ने कार्य केवल औपचारिकता पूरा गर्ने रूपबाट मात्र हुँदै आएको पाइन्छ । सोह्र संस्कारहरूमा कैयन् संस्कारहरू त लोप नै भइसके ।

मानव जीवनलाई मूलतः पाँच भागमा बाँडिएको छ । ती हुन्–बाल्यावस्था, किशोरावस्था, युवावस्था, प्रौढावस्था र वृद्धावस्था । यी पाँच अवस्थाहरूबाट गुज्रिँदै जाँदा मानवले प्राप्त गर्नुपर्ने जम्मा १६ वटा संस्कारहरू छन् ।

## गर्भाधान संस्कार

गर्भाधान संस्कार एक यस्तो प्रक्रिया हो जो नवीन मानवको स्वागतको तयारीको लागि गरिन्छ । प्रकृति र पुरुषको मिलनबाट नै नवनिर्माण सम्भव हुन्छ । आमाको गर्भ शिशुको निम्ति एक अत्यन्त सुकोमल ठाउँ हो जहाँ ऊ पूर्ण आनन्दका साथ रहन्छ । जबसम्म कुनै शिशु गर्भभित्र रहन्छ, ऊ ब्रह्माण्डसँग आबद्ध रहन्छ किनकि आमाको गर्भ नै पूर्ण ब्रह्माण्ड हो । आमाको गर्भभित्र रहेको बालक देवलोक, पितृलोक, यक्षलोक आदि जुन लोकबाट आएको हुन्छ, त्यस लोकसँग उसको सीधा सम्पर्क गर्भमा रहेको हुन्छ । गर्भमा रहेको बालकको प्रत्येक रोम-प्रतिरोमले हजारौं-हजार कान वा आँखाको रूपमा कार्य गर्दछन् जसको कारण बाहिरी जीवनमा बीस वर्ष लगाएर दिन सकिने ज्ञान गर्भभित्र छँदा बीस दिनभित्रमा नै दिन सकिन्छ ।

वैज्ञानिकहरू एवं चिकित्सकहरू गर्भवती महिलालाई कडा मेहनत एवं परिश्रम नगर्ने, चिन्ता, शोक, भय आदिको स्थितिबाट बच्ने, पौष्टिक एवं ऋतु, कालयोग्य आहारविहार अपनाउने, नियमित व्यायाम आदि गर्ने, समय-समयमा स्वास्थ्य परीक्षण गराउने र सकेसम्म मन, चित्त प्रसन्न रहने खालका आनन्दमय पुस्तकहरू अध्ययन गर्ने, मनोरम स्थानहरूमा घुम्ने, डुल्ने र सत्साहित्यादि अध्ययन गर्ने सल्लाह दिन्छन् । यी सब कार्यहरू गर्भवती महिलालाई गर्ने निर्देशन दिइनुको पछाडि विज्ञान यो निष्कर्षमा पुगेको छ कि गर्भवती आमाले खाने, हेर्ने, गर्ने क्रियाकलाप आदिले प्रत्यक्षरूपमा गर्भभित्रको शिशु प्रभावित भइरहेको हुन्छ ।

पशुपंछीहरू वर्षभरिमा एक निश्चित ऋतु (समय) मा मात्रा गर्भधारण गर्दछन्, मानवलाई पनि ईश्वरले गर्भ धारण गर्ने निश्चित समय दिएका छन्, प्रकृतिको नियममानुसार रजस्वला भएको बाह्रौं दिनदेखि अठारौं दिनभित्रको समय गर्भधारणको लागि योग्य ठहऱ्याइएको छ । वैदिक काललाई हेर्दा

ऋषिमुनिहरूका एक, दुई सन्तान भएता पनि तेजस्वी, बलवान् एवं ज्ञानवान् हुन्थे। नवीन मानव रचना गरिदिएकोमा उनीहरू ईश्वरप्रति नतमस्तक रहन्थे। यसैको फलस्वरूप आर्य संस्कृति गौरवशाली बन्न पुगेको छ।

वेदमा भनिएको छ: 'अङ्गादङ्गात्संभवसि हृदयादधि जायसे' अर्थात् मातापितामा रहेको शरीरिक, मानसिक गुण अवगुणको संक्रमण उनीहरूको भावी सन्तानमा अवश्य हुन्छ। यही तथ्यको आधारमा आज वैज्ञानिकहरू गर्भस्थित शिशुलाई उचित रेखदेख पुऱ्याउनुपर्ने सल्लाह दिन्छन्। उपरोक्त वेदवाक्यका अनुसार सन्तान मातापिताको आत्मा, हृदय एवं शरीरबाट उत्पन्न हुन्छ। अत: मातापिताका दोषहरूबाट गर्भ प्रत्यक्षरूपमा संक्रमित हुनपुग्छ फलस्वरूप शिशुमा कैयौँ दुर्गुणहरू प्रवेश गर्ने निश्चित हुन्छ। त्यसैगरी गर्भस्थ बालकले तीव्रताका साथ चेतना ग्रहण गर्ने क्षमता राख्ने हुनाले दुष्ट आत्माहरू, दुष्ट शक्तिहरू यथाशक्य शिशुमाथि आफ्नो प्रभाव पार्ने प्रयास गर्दछन्। उनीहरूले गर्भस्थित बालकमाथि तान्त्रिक प्रयोग गरिदिने, गर्भ तुहाइदिने वा बालकको मृत्यु गराइदिने जस्ता कुकृत्यहरू पनि गर्भावस्थामा सहजै गराइदिन सक्छन्। यिनै अप्रिय कार्यहरूबाट जोगिन 'गर्भाधान संस्कार' सम्पन्न गर्नु अति जरुरी हुन्छ।

आमाबाबुको चित्तवृतिमा रहेको छवि सन्तानमा यसरी प्रष्टसँग उद्घाटित हुन्छ कि उनीहरूमा रहेका न्यूनता र दोषहरू भावी शिशुमा निश्चितरूपबाट बीजारोपण हुन्छ। प्रेममय आध्यात्मिक वातावरणमा बीजारोपण गरिएको शिशु निश्चय नै श्रेष्ठ हुन्छ, त्यसैले गर्भाधान संस्कार प्राप्त गर्नु अति जरुरी छ।

यदि कुनै श्रेष्ठ आत्मालाई गर्भमा स्थापन गराउन कोही मातापिता चाहन्छन् भने सर्वप्रथम गर्भलाई श्रेष्ठ आत्मा धारण गर्न योग्य बनाउनु अति जरुरी हुन्छ, श्रेष्ठ गर्भमा नै उच्चकोटिको आत्माको निवास रहन्छ जसले भविष्यमा आमाबाबु, कुल, वंश, समाज र राष्ट्रको नाम उज्ज्वल पार्दछ। यस्तो सौभाग्य प्राप्त गर्नको लागि गर्भलाई यस जन्मको र पूर्वजन्मका अनेकौं दोषहरूबाट मुक्त गर्नुपर्ने हुन्छ। यसैको लागि नै गर्भाधान संस्कार प्राप्त गर्नु प्रत्येक आमाबाबुको लागि अनिवार्य छ।

पूर्णिमा, औँसी, एकादशी, जन्माष्टमी, रामनवमी आदि वा जन्मदिवस, घर-परिवारमा श्राद्ध परेको दिन, कुनै विशेष पर्व परेको दिन, रजस्वलाकाल, अस्वस्थ अवस्था, व्रत लिएको बेला, भोकै परेको बेला, पति वा पत्नीमध्ये कोही बिरामी भएको अवस्थामा गर्भ स्थापन प्रक्रिया गर्नु पूर्णत: निषेध गरिएको छ। यो वेदवाक्य हो। यस गूढतम तथ्यलाई लत्याएर अगाडि बढ्ने जो कोहीले पनि निश्चय नै भयङ्कर परिणामको सामना गर्नुपर्ने हुन्छ।

## पुंसवन संस्कार

जीवलाई सर्वप्रथम गर्भाधान संस्कारबाट सुसंस्कारित पार्ने कार्य भएपछि 'पुंसवन संस्कार' नामक दोस्रो संस्कारबाट उसलाई सिंचित गर्नुपर्ने हुन्छ। पुंसवन संस्कार यस्तो किसिमको संस्कार हो जसबाट भावी सन्तानमा पौरुष एवं विजयको गुण स्थापित हुन्छ। सामवेद भन्दछ :

**पुमानग्निः पुमानिन्द्रः पुमान् देवो बृहस्पति।**
**पुमांसं पुत्रं विन्दस्व तं पुमान्नु जायताम्।**

अर्थात् अग्नि देवता, देवराज इन्द्र, देवगुरु बृहस्पति पुरुष हुन्। तिम्रो गर्भबाट उत्पन्न हुने सन्तान पनि पुरुषत्वले युक्त होस्। यहाँ पुरुषको मतलब कुनै लिङ्गभेद होइन, सन्तानमा हुनुपर्ने अदम्य साहस र क्षमता हो, यो एउटा गुण हो जो स्त्री वा पुरुष कसैमा पनि हुन सक्दछ।

पुंसवन संस्कारले भावी शिशुमा पौरुष एवं विजयका गुणहरू स्थापित गर्दछ। कालान्तरमा यस संस्कारलाई पुत्र प्राप्ति गर्ने मन्त्रात्मक उपाय मानिन थालिएको थियो तर यो त मात्र अज्ञानता थियो। मूलरूपबाट हेर्ने हो भने पुंसवन संस्कार गर्भस्थ शिशुभित्र पौरुषको गुण विकसित गर्ने आवश्यक संस्कार हो। भावी सन्तान बालक हुन्छ वा बालिका, यो कुरासँग पुंसवन संस्कारको कुनै सरोकार हुन्न। बालक वा बालिका जे भए पनि असक्षम, निर्बल र कमजोर नहोस्, ऊ शक्ति, जुझारूपन र पौरुषले ओतप्रोत होस्, वास्तवमा पुंसवन संस्कार प्राप्त गर्नुको तात्पर्य यही नै हो।

हाम्रा पूर्वजहरूले गर्भधारण भएको दुईदेखि चार महिनाभित्र भावी शिशुको निमित्त पुंसवन संस्कार प्रदान गर्नुपर्ने निर्देश दिनुभएको छ। वैज्ञानिकरूपबाट हेर्ने हो भने पुंसवनकाल अर्थात् गर्भधारण भएको दुईदेखि चार महिनाभित्रको समयमा आमाको शरीरभित्र विशेष आन्तरिक परिवर्तनहरू हुन प्रारम्भ हुन्छ र त्यही समयमा नै गर्भस्थित शिशुको विकास प्रक्रिया पनि तीव्रताका साथ भइरहेको हुन्छ। यसै कारणले नै यस समयावधिलाई हाम्रा पूर्वजहरूद्वारा पुंसवन संस्कार प्रदान गर्नुपर्ने आवश्यक समय मानिएको हो। ठीक यो समयमा संस्कार प्रदान गर्दा आमाको शारीरिक परिवर्तनहरूले (आन्तरिक) शिशुलाई प्रतिकूल प्रभाव पार्न सक्दैन।

## सीमन्तोन्नयन संस्कार

सर्वप्रथम गर्भाधान संस्कार, गर्भ स्थापना भएको दुईदेखि चार महिनाभित्रको समयमा पुंसवन संस्कार र चार महिनाको अवधि पार भइसकेपछि प्रदान गरिने महत्त्वपूर्ण संस्कार 'सीमन्तोन्नयन संस्कार' हो। सीमन्तोन्नयन संस्कारको सम्बन्धमा ऋग्वेद भन्दछ :-

**येनादिते सीमानं नयति प्रजापतिर्महते सौभाग्य।**
**तेनाहमस्यै सीमानं नयामि प्रजामस्यै जरदष्टि कृणोमि॥**

अर्थात् जसरी ब्रह्माले देवमाता अदितिको सीमन्तोन्नयन गर्नुभएको थियो, त्यसैगरी यस गर्भिणीलाई सीमन्तोन्नयन प्रदान गरी यसको सन्तानलाई म दीर्घजीवी बनाउँछु।

सीमन्तोन्नयन संस्कारको माध्यमबाट नै शिशुको ग्रहण शक्ति पर्याप्त मात्रामा विकास हुन थाल्छ, उसलाई यो संस्कार प्रदान गरिँदा

विभिन्न देवीदेवताहरूका मन्त्र चैतन्य गरिन्छ । जस्तै, ब्रह्मा, विष्णु, शिव आदिका मन्त्रहरू । यसको साथसाथै बालकलाई नवग्रहहरूको मन्त्रबाट पनि संस्कारित गरिन्छ ताकि आगामी जीवनमा ग्रहहरूको प्रतिकूल असरको कारण उसलाई दुर्भाग्यको सामना गर्न नपरोस् र प्रारब्धवश कुनै दुर्योग रहेछ भने पनि त्यो टरेर जाओस् ।

शास्त्रले सीमन्तोन्नयन संस्कार, पुसंवन संस्कार लिएपछि बालक चार महिना नाघेर छ महिनाभित्रको हुँदा लिनुपर्ने कुरा निर्दिष्ट गरेको छ । वैज्ञानिक खोज र अनुसन्धानपश्चात् चिकित्सा विज्ञानले यो तथ्य प्रमाणित गरेको छ कि गर्भमा रहेको बालकको शरीरभित्र हृदय निर्माण हुने काम चार महिना नाघेपछि मात्र शुरु हुन्छ । चार महिना अगावै गर्भभित्रको पिण्डमा हृदयको निर्माण नै भएको हुँदैन, जब बालकको हृदय निर्माण हुन्छ तब उसमा अनेकौं चैतन्य शक्तिको प्रादुर्भाव हुन थाल्छ, हृदय चैतन्य स्थान भएकोले त्यहाँबाट चेतनाका प्रवाहहरू उत्पन्न हुन थाल्छन् । फलस्वरूप गर्भभित्रको बालकमा इन्द्रियहरूको प्रभाव पर्न थाल्छ । उसले गर्भमा उत्पन्न गरेका इच्छाहरू आमामा सरेर आउँछन् जसको कारण गर्भवती महिलाहरूमा कहिलेकाहीं अनायासै कुनै विशेष पदार्थ खाने वा विशेष स्थलहरूमा भ्रमण गर्न जान मनलाग्ने आदि लक्षणहरू देखा पर्छन् । चार महिनापछि मात्रै गर्भस्थ पिण्डको शारीरिक विकास तीव्रताका साथ हुन थाल्छ र विलक्षण शारीरिक तथा मानसिक परिवर्तन पनि हुन थाल्छ । उपरोक्त तथ्यलाई आजका वैज्ञानिकहरूले प्रमाणित गरिसकेका छन् । यस संस्कार प्रदान गरिने, प्रवाह गरिने विभिन्न देवीदेवताहरूका चैतन्य मन्त्र र गुरूप्रदत्त शक्तिले बालकको व्यापक बन्ने, चेतनावान् बन्ने प्रबल इच्छालाई ठीक समयमा पूरा गरिदिन्छ जसबाट बालकका सम्पूर्ण संस्कारदोषहरू मेटिन्छन्, उसको आत्मिक, शारीरिक र मानसिक विकास हुनुपर्ने ठीक समयमा गुरूप्रदत्त शक्ति र चैतन्यता उसले प्राप्त गर्दछ । फलस्वरूप बालक दैवी गुणसम्पन्न व्यापक क्षमतावान् शिशुको रूपमा रूपान्तरण हुन पुग्दछ ।

शास्त्र भन्दछ, आमाको पाँच र बुबाको सात पिँढीलाई छोडेर असौगोत्रीय आफ्नो जातिको कन्यासँग मात्र वैवाहिक सम्बन्ध गाँस्नु पर्दछ । यस नियमको दायरा नाघेर कार्य गर्नाले वर्णशङ्कर सन्तान उत्पन्न हुन गई समाज र कुलको अहित हुन पुग्छ, उक्त सन्तानले यस लोकको पतन गराई पितृहरूको समेत पतन गराउने र फलस्वरूप परलोकमा समेत दु:खकष्ट दिने हुन्छ ।

उपरोक्त कुरालाई वैज्ञानिक दृष्टिबाट हेर्दा यस्तो पाइयो कि आमाको पाँच र बुबाको सात पिँढीभित्रका सन्तानहरूको रगत अत्यन्त समान जातीयतायुक्त भेट्टियो । यसरी रक्तमा हुने अति समानताको कारण उक्त पिँढीभित्र पर्ने स्त्री, पुरुषबाट उत्पन्न सन्तानले कुनै पनि नयाँपन, नवीनता, उत्कृष्टता दिन सक्दैन भन्ने वैज्ञानिक ठहर भयो । जसरी पानीसँग पानी वा दूधसँग दूध मिसाउँदा कुनै नयाँपन, कुनै विकास त्यहाँ पाइँदैन तर दूधमा दही मिसाउँदा मख्खनजनक स्वास्थ्यप्रदायक पदार्थहरू सजिलै प्राप्त गर्न सकिन्छ ।

'गर्भस्थ बालक चैतन्य दीक्षा' प्रत्येक गर्भस्थित बालकलाई दिलाउनै पर्ने अद्वितीय दीक्षा हो । यस दीक्षा प्रदान गर्न गूढ विधि-विधान केवल सद्‌गुरुदेवसँग सुरक्षित छ र यस ब्रह्माण्डमा हरपल यस दिव्य दीक्षासँग सम्बन्धित चैतन्य मंत्रहरू गुञ्जिरहन्छन् जसलाई तपस्याको मद्दतबाट प्राप्त गर्न सकिन्छ आज पनि ।

सूक्ष्म विवेचनाद्वारा र सूक्ष्म अध्ययनद्वारा हेर्ने हो भने आमाको गर्भ नै पूर्ण ब्रह्माण्ड हो, आमाको गर्भ संसारको सबैभन्दा सुकोमल, सक्षम र सुरक्षित स्थान हो बालकको निम्ति । त्यसैले जबसम्म बालकले मृत्युलोकमा जन्म लिँदैन तबसम्म ऊ ब्रह्माण्डसँग भित्रीरूपबाट आबद्ध रहन्छ किनकि गर्भमा रहेको बालक ब्रह्माण्डको कुनै एक कुनाबाट आएको हुन्छ, हुन सक्छ त्यो बालक पितृलोकबाट आएको होला, देवलोकबाट आएको होला वा जुनसुकै लोकबाट ऊ आएको भएता पनि त्यस लोकसँग उसको सीधा सम्पर्क, साहचर्य रहेको हुन्छ । यसप्रकारसँग सम्पर्क स्थापित हुने क्रिया यसकारण सम्भव हुन्छ कि उक्त बालकको सारा शरीर नै ब्रह्माण्डमय हुन्छ, त्यस बालकले केवल दुईवटा कानले मात्र सुन्ने होइन, केवल दुईवटा आँखाले मात्र देख्ने होइन उसको शरीरस्थित हजारौं हजार रोमछिद्रहरूले आफैमा कान र आँखाको कार्य गर्दछन् र प्रत्येक छिद्र परिपक्व अवस्थामा रहेको हुन्छ । त्यसैले गर्भको बालक ज्यादा समर्थ, कुनै पनि ज्ञान ग्रहण गर्नको निम्ति ज्यादा सक्षम हुन्छ, उसले कुनै पनि क्षेत्रमा सजिलैसँग पूर्णता प्राप्त गर्न सक्दछ ।

## जातकर्म संस्कार

जातकर्म संस्कार यस्तो किसिमको महत्त्वपूर्ण संस्कार हो जसबाट बालकलाई दीर्घायु, तेजस्विता, पराक्रम आदि शुभ गुणहरूको आशीर्वाद प्राप्त हुन्छ । यस दिव्य संस्कारद्वारा शिशुको आत्माले अपूर्व पोषण प्राप्त गर्दछ ।

हामी कान, आँखा, नाक, जिब्रो र छाला यी पाँच ज्ञानेन्द्रियहरूद्वारा शब्द, स्पर्श, रूप, रस र गन्ध यी पाँच विषयहरू ग्रहण गर्दछौं । यी सबै विषयहरूको प्रभाव हाम्रो मनमा सर्वप्रथम पर्दछ, त्यसपछि रगतमा पर्दछ र क्रमश: रज एवं वीर्यसम्म पुग्दछ । रज, वीर्य जस्तो हुन्छ, सन्तान त्यस्तै प्रकृतिको उत्पन्न हुने हुनाले उत्तम सन्तान प्राप्तिको लागि रज, वीर्यको सात्विकता र सुरक्षा हुने किसिमको स्थूल एवं सूक्ष्म आहार अपनाउनु अति आवश्यक हुन्छ ।

मनुष्यले जुन प्रकारको सात्विक, राजसी वा तामसी भाववर्द्धकरूप आँखाले हेर्दछ, त्यो केही समयपछि मनमा र रक्त आदिद्वारा वीर्यसम्म पुग्दछ । जस्तै, रङ्गी-विरङ्गी, चम्किला, भड्किला पोशाक र दृश्यहरू जब मनुष्यको आँखामा पर्दछ, त्यसले मनमा राजसी कामभाव उत्पन्न गर्दछ जसले रक्त मन्थनपूर्वक वीर्यलाई उत्तेजित पार्ने काम गर्दछ । यस्तो प्रभाव युवक तथा युवतीहरूमा अप्रकटरूपमा पर्दछ । यसको

प्रबल प्रमाण यो हो कि उपर्युक्त प्रकारका दृश्यहरू हेरिरहने बाल-बालिकाहरूमा अरूमा भन्दा वीर्य र मासिक धर्मको प्रादुर्भाव समयभन्दा कैयन् अगाडि नै हुनपुग्छ जसले गर्दा बालकको शरीरको, मन मस्तिष्कको पूर्ण विकास हुन सक्दैन, उनीहरू अनेकौं कुलत र कुकृत्यहरूप्रति स्वत: आकर्षित हुन थाल्दछन् । यसैप्रकार तामसिक, हिंस्रक आदि चित्र, दृश्यहरू र सात्विक, दया, परोपकार आदि दृश्ययुक्त चित्र, क्रियाकलापहरू हेर्ने बालकको मन तथा अन्त्यमा वीर्य ती दृश्यादिबाट अवश्यै प्रभावित हुन्छन्, अत: उच्चकोटिको संस्कारवान् बालकलाई जन्म दिन आमाबुबा दुवैको क्रियाकलापहरू पनि सात्विक हुनु नितान्त जरुरी छ ।

## नामकरण संस्कार

अन्य संस्कारहरूझैं यस नामकरण संस्कारको पनि विशेष महत्त्व छ । शास्त्रमा भनिएको छ– 'यथा नाम तथा गुण:' अर्थात् नाम जस्तो हुन्छ व्यक्तिको गुण पनि त्यस्तै हुन्छ । जसरी कुनै एउटा निश्चित मन्त्रलाई बारम्बार दोहोऱ्याएर जप गर्दा शरीरमा मन्त्रको गुण स्थापित हुन थाल्दछ, ठीक त्यसै गरी कुनै पनि नामबाट व्यक्तिलाई निरन्तर बोलाएपछि त्यस नामको प्रत्यक्ष असर उसलाई अवश्यै पर्दछ । जुन प्रक्रिया अप्रकटरूपले व्यक्तिको अन्त: एवं बाह्यरूपमा पर्दछ । मनुले यस 'नामकरण संस्कार'को सम्बन्धमा भन्नुभएको छ–

**आयुर्वर्चोऽभिवृद्धिश्च सिद्धिर्व्यवहृतेस्तथा**

अर्थात् नामकरण संस्कारका दुईवटा प्रयोजन छन्– आयु र तेजमा वृद्धि तथा सांसारिक व्यवहारमा यश, कीर्ति प्रदान गर्ने खालको नामको उपयोग । हामीले ज्योतिषशास्त्रमा एकपटक नियाल्यौं भने त्यहाँ एउटा पूरा विद्या नै नामाक्षरहरूमा आधारित रहेको पाइन्छ । त्यही नामाक्षरको आधारमा व्यक्तिको भूतकाल, भविष्यकाल एवं अन्य गोपनीय, रहस्यमय पक्षहरूलाई समेत आंकलन गर्न सकिन्छ । यसको तात्पर्य यो हुन आउँछ कि बालकको नाम कुन अक्षरबाट प्रारम्भ भएको छ, बालक कुन तिथि र दिनमा जन्मेको हो यी कुराहरूलाई गौण भन्न कुनै पनि हालतमा मिल्दैन । आजकल समाजमा जसलाई जे राम्रो लाग्यो, त्यही नाम बिना कुनै सोचविचार राख्ने गरिन्छ । त्यसबाट व्यक्तिको व्यक्तित्व विकासमा धेरै ठूलो असर पर्दछ, नाम राख्नुको पछाडि लुकेर रहेको यो गोपनीय तथ्य आज समाजबाट लुप्तप्राय: स्थितिमा छ । अर्थहीन नाम बालकलाई राखिदिएर आफ्नो दायित्व पूरा भएको सम्झने प्रत्येक आमा-बाबुले हाम्रो धर्मशास्त्रले 'नामकरण संस्कार'अन्तर्गत रहेको महत्त्वलाई एकपटक मनन गर्नैपर्ने हुन्छ ।

## निष्क्रमण संस्कार

निष्क्रमण संस्कार बालकलाई प्रदान गर्नु यसकारण जरुरी हुन्छ कि गर्भबासबाट बालक बाहिर आइसकेपछि उसको शरीरले बाहिरी संसारको जल, वायु, ताप, शीत आदिसँग जुध्नुपर्ने हुन्छ । बालकले यी सब प्रकारका स्थितिहरूसँग आफ्नो शरीरको तालमेल मिलाउन सकोस् भन्ने हेतुले उसलाई निष्क्रमण संस्कार प्रदान गर्नुपर्दछ । 'निष्क्रमण काल' बालक जन्मिएदेखि एक वर्षभित्रको समयलाई मानिन्छ । यस समयमा बालकको पोषण प्रकृति स्वयंबाट हुन्छ । यसको आवश्यक तालमेल मिलाउनको लागि बालकलाई हावा, घाम आदिको सेवन गराउनु पर्दछ जसबाट बालक पुष्ट बन्दै जान्छ । सूर्योदय भएपछिको एक घण्टाभित्रको समयमा सूर्यबाट प्राप्त हुने रश्मिहरू बालकको लागि लाभकारी मानिन्छन् । बालकलाई वस्त्र लगाइदिएर न्यानो पारिदिनु त पर्छ तर बाहिरको हावा र घामको स्पर्श नै हुन नसक्ने गरी ज्यादा वस्त्रहरूले ढाकेर राख्नु उचित हुँदैन ।

यस दिव्य संस्कारद्वारा बालकलाई सूर्यदेव, वरुणदेव एवं वायुदेवद्वारा स्वास्थ्यकारी गुणहरू प्राप्त हुन जान्छन् जसबाट उसमा उपर्युक्त देवताहरूमा भएका गुणहरू स्वत: विकास हुन थाल्छन् । बालकभित्र सूर्यको प्रखरता, तेज, प्रचण्डता, वरुणदेवता (जलदेवता) को निर्मलता, मनको पवित्रता, स्वच्छता, शुचिता एवं वायुदेवभित्रको बाल चञ्चलता, स्वतन्त्रता र उन्मुक्तता आदि गुणहरू बालकमा स्वत: नै बीजारोपण हुन्छन् । बालकलाई यस निष्क्रमण संस्कारद्वारा प्राप्त हुने दिव्य गुणहरूले उसलाई भविष्यमा गुणवान्, क्षमतावान् व्यक्तित्वमा रूपान्तरण हुन भरपूर मद्दत गर्दछन् ।

## अन्नप्राशन संस्कार

हिन्दु संस्कार पद्धतिमा अति प्रचलित संस्कारमध्ये अन्नप्राशन संस्कार पनि एक हो । अन्नप्राशनलाई बोलीचालीमा 'बच्चालाई भात खुवाउने' भन्ने गरिन्छ । बच्चा ठोस वस्तु सेवन गर्न सक्ने उमेरको भएपछि सर्वप्रथम विविध पूजन प्रक्रियासहित ठोस वस्तुको रूपमा भात खुवाइन्छ । यस्तो बेला शिशुलाई नुहाइदिने, नयाँ पोशाक लगाइदिने र मन्दिरहरूमा दर्शनका लागि लग्ने चलन रहेको पाइन्छ । जातजातिअनुसार नै अन्नप्राशन प्रक्रियामा केही विविधता देखिएता पनि यसको सम्पादन हिन्दु संस्कारको एउटा अभिन्न अङ्ग बनिसकेको छ ।

जब शिशु छ-सात महिनाको हुन्छ तब उसको अन्नप्राशन संस्कार गरिदिनुपर्दछ जसबाट शिशुले ग्रहण गरेको भोज्यान्नबाट उसको जीवनमा उच्च संस्कार तथा उच्च भाववृत्तिहरूको सृजना हुन सकोस् । यसबाट उसमा उदात्त गुणको प्रस्फुटन हुन्छ । अन्नदोषबाट जुन अनेक दुर्गुण अज्ञात रूपबाट मनुष्यलाई पूर्वजहरूबाट प्राप्त हुन्छ, त्यो यस संस्कारको प्रभावबाट उत्पन्न हुन पाउँदैन ।

अन्नप्राशन संस्कार मूलभूतरूपमा देवी अन्नपूर्णको साधना हो । यस साधनालाई शिशुका लागि उसका माता अथवा पिताले नै सम्पन्न गर्नुपर्दछ । यसबाट शिशु कृशकाय, रोगी वा जीर्ण-शीर्ण हुन पाउँदैन । अन्नशक्तिबाट उसको शरीर पुष्ट रहन्छ ।

यो संस्कार सम्पन्न गर्नाले शिशुलाई मात्र नभई उसका मातापितालाई पनि पूर्ण फल प्राप्त हुन्छ र मातापितालाई पनि अन्नपूर्ण साधनाका सबै लाभ प्राप्त हुन्छन् ।

## चूडाकर्म

**निवर्तयाम्यायुषेऽन्नाद्याय प्रजननाय ।**
**रायस्पोषाय सुप्रजास्त्वाय सुवीर्याय ।**
(यजु. अ. ३ मं. ३३१)

हे बालक ! दीर्घायुका लागि, अन्न ग्रहणमा समर्थ बनाउनका लागि, कर्मशीलताका लागि, ऐश्वर्य वृद्धिका लागि, सुन्दर सन्तान र बल-पराक्रम प्राप्तिका लागि तिम्रो मुण्डन गरिन गइरहेको छ ।

चूडाकर्म संस्कार बल, आयु तथा तेज वृद्धिका लागि गरिने आठौँ संस्कार हो । यसभन्दा अगाडिका सात संस्कार दोष परिमार्जन श्रेणीका हुन् र ती सात संस्कारहरूद्वारा खानीबाट निक्लेको फलामको माटो हटाउनु, माझ्नु, तपाउनु आदिजस्तै गर्भवासजन्य दोषादिलाई निवृत्ति गरेर बालकलाई शुद्ध बनाइन्छ । चूडाकर्म, उपनयन आदि अगाडिका चार संस्कार हरूद्वारा जीव अर्थात् बालकमा गुणहरू पूर्णरूपमा स्थापित हुन्छन् । यस संस्कारको दोस्रो नाम मुण्डन संस्कार पनि हो । यसमा शिखालाई छोडेर शेष कपाललाई खौरिने गरिन्छ । महर्षिहरूको चिन्तन रहेको छ कि यस्तो गर्नाले शैशवावस्थासम्बन्धी कैयौं रोगहरूबाट निवृत्ति मिल्न जान्छ । 'चूडा क्रियतेऽस्मिन्'– बालकलाई चूडा (शिखा) धारण गराइयोस् ।

**पौष्टिकं वृष्यमायुष्यं शुचि रूपं विराजनम् ।**
**केशश्मश्रुनखादीनां कर्तनं सप्रसाधनम् ॥**
(चरक सूत्रस्थान, ५, सूत्र ९३)

बालकको प्रथम केशहरूको मुण्डन गराउनाले बालकको मस्तिष्कका तन्तुहरूमा पुष्टता, शक्ति एवं शीतलता प्राप्त हुन्छ । मुण्डन गराउनाले भविष्यमा बालकलाई बौद्धिक शक्तिको विकासमा अत्यधिक अनुकूलता मिल्छ ।

## कर्णवेध संस्कार

मानिस जति पनि ज्ञान प्राप्त गर्दछ त्यसको अधिकांश भाग कि त आँखाको माध्यमले हेरेर पाउँछ कि कानको माध्यमले सुनेर पाउँछ । कर्णवेध संस्कार बालकको श्रवण शक्तिलाई संवर्धित गर्नका लागि दिइन्छ । कानमा प्वाल पार्नु र त्यसमा कुण्डल लगाउनु एक्युपङ्क्चरको सिद्धान्तमा आधारित छ किनभने कानको त्यस भागमा नशाहरूको जुन समूह छ, त्यसको सम्बन्ध सोझै मस्तिष्कको स्पन्दनशील क्षेत्रसँग छ । यसबाट मस्तिष्क एवं कुण्डलिनीका चक्रहरूमा चेतना विकसित हुन्छ, बालकको श्रवण शक्ति तथा ग्राह्य शक्ति तेजिलो हुन्छ ।

## वेदारम्भ संस्कार

युग परिवर्तनको साथसाथै संस्कार पनि परिवर्तन हुँदै जान्छन् । वेदारम्भको तात्पर्य विद्यारम्भसँग छ, अर्थात् जे पनि शिक्षा ग्रहण गरिन्छ त्यो उसका लागि जीवनोपयोगी होस्, साथै उसको मेधा शक्ति, वाक् शक्तिको पूर्ण विकास होस्, उसमा कुनै प्रकारको हीन भावना उत्पन्न नहोस् । उसका न्यूनताहरूले उसको मनमा प्रभाव नगरून् भनेर नै वेदारम्भ संस्कार सम्पन्न गरिन्छ ।

विद्याकी अधिष्ठात्री देवी सरस्वती हुन् । त्यसैले यस संस्कारमा सरस्वतीको ध्यान, पूजन एवं सरस्वती दीक्षाको विशेष महत्त्व छ । सामान्यतया विद्याध्ययन चार-पाँच वर्षदेखि बाइस-तेइस वर्षको उमेरसम्म चल्दछ । अत: शिक्षाको आरम्भमा नै बालकलाई गुरुबाट दीक्षित गराएर सरस्वती दीक्षा प्रदान गरिएमा उसको मानसिक शक्तिको विकास हुन्छ । शारीरिक बलभन्दा मानसिक बल सदैव माथि रहेको छ र सरस्वती साधना यस बललाई नै तेजिलो पार्ने क्रिया हो ।

संस्कारमा रहेका जुनसुकै ज्ञानलाई पनि सर्वप्रथम गुरुको मुखबाट शिष्यलाई प्रदान गरिन्छ र शिष्य त्यसलाई आफ्नो मानसपटलमा ग्रहण गरेर कंठस्थ गर्दछ, त्यसैले सरस्वतीको बास कंठमा मानिएको छ । वेदारम्भ संस्कार विद्यालाई अर्थपूर्ण ढङ्गले प्राप्त गर्ने क्रियाको नाम हो ।

## उपनयन संस्कार

अथर्ववेदका ऋचाहरूमा भनिएको छ– गुरुले जब बालकलाई आफ्नो करकमलबाट यो संस्कार प्रदान गर्नुहुन्छ, तब उसलाई आफ्नो प्राण ऊर्जाबाट नयाँ जन्म दिनुहुन्छ ठीक त्यसै प्रकार जसरी आमाले आफ्नो शिशुलाई गर्भबाट जन्म दिन्छिन् । गुरुद्वारा दिइएको यो दोस्रो जन्मले बालकलाई द्विजस्वरूप प्रदान गर्दछ । त्यसपश्चात् उसलाई आशीर्वाद दिन देवताहरू पनि लालायित हुन्छन् ।

न ह्यस्मिन्युज्यते कर्म किञ्चदामौञ्जीबन्धनात्
(मनु २/१७१)

अर्थात् यज्ञोपवीत संस्कार नभइकन द्विज कुनै पनि कर्मको अधिकारी हुँदैन । उपनयन संस्कारसँगै बालकलाई यज्ञोपवीत धारण गराइन्छ । गुरुद्वारा दिइएको यस दोस्रो जन्मद्वारा उपनीत बालकको स्थूल शरीरको अपेक्षा अविनाशी ज्ञानमय शरीरको प्राप्ति हुन्छ । यसैले यस संस्कारको महत्त्व हुन्छ ।

उपनयन संस्कार ब्रह्मत्वदायक जन्म हो जसमा गायत्री आमा एवं गुरु (आचार्य) लाई पितास्वरूप मानिएको छ । यसरी उपनयनद्वारा बालक क्रियापथमा अग्रसर हुन्छ ।

मनुका अनुसार जब बालक ८ देखि १२ वर्षको हुन्छ तब उसलाई गुरुद्वारा उपनीत गराइदिनुपर्छ । उपनयनको अर्थ हुन्छ– बालकलाई गुरुको नजिक लैजानु अर्थात् गुरुले यो संस्कारद्वारा बालकलाई आफ्नो नजिक ल्याउनुहुन्छ, आफ्नो आत्मीय बनाएर उसको शिक्षा-दीक्षाको भार पनि स्वयंले नै वहन गर्नुहुन्छ । गुरुको नजिक आउनु भन्नुको तात्पर्य उहाँको आत्मीय सन्निकटता प्राप्त गर्नु हो ।

उपनयन संस्कारलाई यज्ञोपवीत संस्कार भनिन्छ । यसमा गुरुले यज्ञोपवीत अथवा जनै बालकलाई विशेष प्रकारको मन्त्रद्वारा अभिमन्त्रित गरेर चेतनायुक्त बनाएर धारण गराउनुहुन्छ र विद्या प्राप्तिको लागि अग्रसर गराउनुहुन्छ ।

यो संस्कार बालक अथवा बालिका दुवैलाई गराउन सकिन्छ । यसको लागि लिङ्गको कुनै भेद छैन । यो एउटा गुरुसँग नजिक हुने संस्कार हो । त्यसैले गुरुको लागि कोही स्त्री, कोही पुरुष भन्ने हुँदैन । उहाँको लागि सबै बालक नै हुन्छन् ।

यज्ञोपवीत धारण गर्ने अधिकार केवल ब्राह्मण कुलमा उत्पन्न हुने बालकलाई मात्र छैन । शास्त्रमा त द्विज शब्द दिइएको छ । अर्थात् गुरुले यज्ञोपवीत संस्कारद्वारा उसलाई आफ्नो नजिक लाने क्रिया गर्नुहुन्छ । साथै उसलाई यो संकल्प पनि दिलाउनुहुन्छ कि तिम्रो जीवनमा माता-पिता, गुरु र देवताहरूप्रति जुन कर्तव्य छ, त्यो सधैं निभाउनुपर्दछ ।

## समापवर्तन संस्कार

सोह्र संस्कारमध्ये समापवर्तन संस्कार बाह्रौं संस्कार हो । जब ब्रह्मचारी युवकको विद्या अध्ययन पूर्ण हुन्छ, गुरुकुलमा त्यस समय विद्यार्थीलाई यो संस्कार प्रदान गरेर समाजमा स्थापित हुनको लागि गुरुले पठाउनुहुन्छ जसले गर्दा त्यो व्यक्ति समाजमा सुसंस्कृत गर्दै जीवनमा यश, मान, पद, प्रतिष्ठा, भोग, ऐश्वर्य सबै प्राप्त गर्दै गुरुले दिनुभएको आदेशको पालन गर्न सकोस् । आजको युगमा जब उसको शिक्षा पूर्ण हुन जान्छ, तब उसले यो संस्कार प्राप्त गर्नुपर्दछ । यो संस्कारपछि युवकले अर्थोपार्जनको लागि कुनै विशेष क्षेत्रको चयन गर्नुपर्दछ । आजको युगमा अधिकांश युवक प्रतियोगितात्मक परीक्षामा सफल भएर अधिकारी, चिकित्सक, अभियन्ता आदि बन्ने प्रयास गर्दछन् । कुनै पनि क्षेत्र होस्, यस संस्कारद्वारा युवकलाई आफ्नो गुरुको आशीर्वाद प्राप्त हुन्छ जसबाट उसले समाजमा एउटा श्रेष्ठ स्थान ग्रहण गर्न सकोस्, एउटा सफल जीवनहेतु त्यो सबै प्राप्त गर्न सकोस् जुन उसको अभीष्ट हो । यस संस्कारद्वारा उसलाई आफ्नो खुट्टामा उभिने बल प्राप्त हुन जान्छ ।

जब युवक यो ठान्दछ कि अब उसको लौकिकरूपमा विद्या अध्ययन समाप्त भयो, ऊ अर्थोपार्जन एवं सामाजिक जीवनमा आउन चाहन्छ तब उसले यो संस्कारको लागि प्रयत्न गर्नुपर्दछ । यो संस्कार जीवनमा मूलत: संकल्प शक्तिलाई दृढ गर्ने संस्कार हो । विद्या अध्ययनपछि जुन क्षेत्रमा युवक प्रवेश गर्दछ, त्यसमा उसलाई पूर्ण उन्नति प्राप्त होस् भन्नाको लागि यो संस्कार सम्पन्न गर्नुपर्दछ ।

## पाणिग्रहण संस्कार

वेदमा मानिसको आयुलाई चार भागमा विभाजन गरिएको छ । ब्रह्मचर्य आश्रम, गृहस्थ आश्रम, वानप्रस्थ आश्रम एवं संन्यास आश्रम । ब्रह्मचर्य आश्रमपछि व्यक्तिले गृहस्थ आश्रममा प्रवेश गर्दछ । जसको अर्थ नै परिणय वा विवाह हो । सोह्र संस्कार हरूमा तेह्रौं पाणिग्रहण संस्कारलाई प्रमुख तथा महत्त्वपूर्ण संस्कारको रूपमा लिइन्छ किनकि यो संस्कार नै सम्पूर्ण सृष्टिको मूल कारण हो । यही संस्कारबाट नै सृष्टिको शुरुआत हुन्छ । मानव मात्र हैन कि पशुपक्षी, कीटपतङ्ग, वनस्पति सबैको सृष्टि यही संयोग क्रियाबाट नै हुन्छ ।

विवाह दुई आत्माको संयोग हो, मिलन हो । यदि यो संयोग ठीक तरीकाले भएन भने जीवन दु:खदायी तथा कष्टदायी हुन्छ । यही कारणले नै विवाह हुनुभन्दा पहिले वरवधुको जन्मकुण्डली मिलाउने, गुणहरू हेर्ने कार्य गरिन्छ । यी सब गर्नुको पछाडि वैवाहिक जीवनको सफलताबारे जानकारी लिनु हो ।

विवाहको रीतिरिवाज, कर्मकाण्ड परम्परागत तरीकाको हुन्छ । वास्तवमा विवाह एक प्रकारले दुई अपरिचित अन्जान व्यक्तिलाई एक सूत्रमा बाँध्ने एउटा सामाजिक स्वीकृति हो । यो आत्माको स्तरको संस्कार हो । अर्थात् पति-पत्नी आत्मिकरूपबाट सामञ्जस्य हुन नितान्त आवश्यक हुन्छ । तब मात्र विवाहबन्धन सुदृढ र सफल हुन्छ । यसैले प्राचीन समयमा दुवै पक्ष (वर-वधु) को न्यूनताहरूलाई हटाउन दैवी सहायता लिने गरिन्थ्यो । देवी-देवताहरूसँग प्रार्थना गरेर वरवधुलाई आशीर्वाद मागेर उनीहरूको जीवनमा सुख, सुविधा, सौभाग्य, यश, सम्मान, वैभव तथा दिव्य सन्तान उत्पत्तिको लागि याचना गरिन्थ्यो । वरवधुको परस्पर कतिपय यस्ता गुणहरू हुन्छन् जुन एक-अर्कासँग मेल खाँदैनन् । यस्तो असमान गुणलाई सहजरूपमा समाधान गर्ने कार्य दिव्यदृष्टिसम्पन्न गुरुले नै गर्न सक्दछन् । यस संस्कारद्वारा वरवधुले दैवी आशीर्वाद प्राप्त गरी एक-अर्काप्रति आजीवन सौहार्द्रपूर्ण बन्न निष्ठावान् बन्न सक्ने पात्रता तथा गुण प्राप्ति हुन्छ । भावी जीवन सुखमय बनाउन यो संस्कारको आवश्यकता पर्दछ । जसले गर्दा वैवाहिक जीवनमा एक-अर्काप्रति सहयोग तथा मित्रवत व्यवहार रहिरहन्छ न कि एकै छानामुनी पति-पत्नी शत्रुवत् जीवन निर्वाह होस् ।

## वानप्रस्थ

गृहस्थ आश्रममा प्रवेश गरिसकेपछि जीवनको करिब आधाआधी यात्रा पूर्ण गर्दा नगर्दै कुनै पनि व्यक्तिले आफ्नो जीवनको अधिकांश कर्तव्यहरू पूरा गरिसकेको हुन्छ । आफ्नो कर्म र कर्तव्यबाट विमुख भएर आफ्नो दायित्वबाट भागेर कुनै पनि व्यक्तिले आफ्नो उद्देश्य प्राप्त गर्न सक्दैन । आयुको प्रथमखण्ड पठन-पाठनमा नै सकिन्छ भने गृहस्थाश्रममा उसले आदर्श सन्तान जन्माउनेदेखि लिएर जीवनको अधिकांश कर्तव्य, दायित्व पूरा गर्दै जीवन यात्रामा अगाडि बढिरहेको हुन्छ । बिस्तारै-बिस्तारै व्यक्तिभित्र विषय-वासनाप्रति विमुखता अर्थात् वैराग्यता जाग्न थाल्दछ । त्यसपछि मात्र वानप्रस्थको भूमिका सृजना हुन्छ । वानप्रस्थ आदर्श जीवनको तेस्रो भाग हो । यस भागमा आत्मकल्याण, लोककल्याण, परहित चिन्तन, ध्यान, साधनामा ज्यादा समय बिताउनु उचित देखिन्छ ।

वानप्रस्थ संस्कारको आशय वा मुख्य उद्देश्य नै व्यक्तिभित्र गृहस्थप्रति विमुखता तथा उदासीनताको भाव जगाएर बढीभन्दा बढी समय आत्मकल्याणमा लगाउनु हो ।

प्राय: यो देखिन्छ कि जीवनको लामो यात्रा सकिसक्दा पनि मानिसहरू धन-सम्पत्ति, विषय-वासनामा डुबिरहेका हुन्छन् । लोभ, मोहमा घेरिरहेका हुन्छन् । यस्तो परिस्थितिमा उसको आत्मिक विकास सम्भव हुँदैन । यदि उसको आत्मिक विकास हुँदैन भने उसको सारा जीवन नै व्यर्थ हुन्छ । वानप्रस्थ जीवनमा व्यक्ति आफ्नो छोरा-छोरीहरूको बिहेवारीबाट मुक्त हुँदै बाँकी रहेको कर्तव्य, दायित्वहरू आफ्नो छोरालाई सुम्पिएर आफ्नो अधिकांश समय आत्मचिन्तन ध्यान, साधना र प्रभु स्मरणमा निश्चिन्त भएर बिताउन थाल्दछ । यदि व्यक्तिले यो संस्कार प्राप्त गरेमा व्यक्तिमा वैराग्य एवं आत्मकल्याणको भावना जागृत हुन्छ । वानप्रस्थ अर्थात् ' वनतर्फ प्रस्थान गर्नु' तर यहाँ 'वन'को अर्थ घर छोडेर जंगलतिर भट्कनु हैन कि संसारको कोलाहलबाट हटेर आत्माभिमुख हुँदै आत्मकल्याणको बाटोतर्फ प्रस्थान गर्नु हो ।

## संन्यास

आयुको चौथो तथा अन्तिम भाग सबै झन्झटहरूलाई छोडेर केवल आत्मकल्याणको साधना र प्रभु प्राप्तिको लागि नै लगाउनुपर्छ । यही संन्यास आश्रमको आदर्श हो । वानप्रस्थमा वैराग्यको बीजारोपण मात्र भएको हुन्छ भने संन्यास आश्रममा त्यस बीजको पूर्णरूपले विकास हुन्छ । अर्थात् जुन दिन वैराग्यको उदय हुन्छ त्यस दिन संन्यास ग्रहण गर्नुपर्छ । तर यो वैराग्य मसान वैराग्य नभएर वानप्रस्थमा लामो समयसम्म पोषण पाएर झ्याङ्गिएको परिपक्व वैराग्य होस् । तब मात्र संन्यास भन्न सकिन्छ । मसान वैराग्यको अर्थ यो हो कि जब मानिस कसैको अन्तिम यात्रामा सामेल भएर मसानमा जान्छ र त्यहाँ जलिरहेको चितालाई देखेर उसलाई जीवनको निस्सारता बोध हुन्छ, उसलाई संसारबाट विरक्ति लाग्छ । तर यो विरक्ति स्थाई हुँदैन, क्षणिक मात्र हुन्छ । मसानबाट फर्किना साथ फेरि संसारमा लिप्त हुन्छ र यो दुई क्षणको वैराग्य धराशायी हुन पुग्छ । यसलाई पूर्ण वैराग्य भन्न सकिन्न ।

यस्तो काँचो भावुकतामा संन्यास धारण गरेका कति युवकहरू बीच बाटोमा नै भट्किन थाल्छन् किनकि त्यो मात्र भावनाको आवेशमा धारण गरेको संन्यास थियो । गृहस्थ र वानप्रस्थ जीवनका उतार-चढावका अनुभवहरूबाट प्राकृतिकरूपबाट नै बिस्तारै विरक्तिको भाव वा अनासक्तिको भाव उत्पन्न हुन्छ, त्यही नै वास्तविक संन्यास हो ।

संन्यास आश्रमको पूर्णता तब मात्र भएको मानिन्छ जब व्यक्तिले गृहस्थ र वानप्रस्थ आश्रमका दायित्वहरूलाई पूर्णरूपले पूरा गरिसकेको हुन्छ । यदि गृहस्थको कर्तव्य अझै बाँकी छ भने यस्तो अवस्थामा संन्यास कुनै पनि हालतमा सार्थक हुन सक्दैन ।

संन्यास दीक्षाको परम्परा आदि शंकराचार्यको समयदेखि प्रारम्भ भएको हो । वास्तवमा कोही घरबाट गेरुवस्त्र लगाएर वनतिर भट्किनेलाई संन्यास भनिन्न । बरू समाजमा निर्लिप्त भएर कर्तव्यबाट मुक्त जीवनयापन गर्नुलाई नै संन्यास भनिन्छ । यहाँ यो कुरालाई ध्यान दिनु उचित देखिन्छ कि कर्तव्यबाट मुक्तिको अर्थ कर्तव्यबाट भाग्नु बिल्कुलै होइन । व्यक्तिले आफ्ना सम्पूर्ण कर्तव्यहरू अघिल्ला आश्रमहरूमा नै पूरा गरिसकेका हुन्छन् । तसर्थ, उसको लक्ष्य केवल मात्र ईश्वर प्राप्ति, प्रभु-चिन्तन र आत्मकल्याण हुन्छ ।

## अन्त्येष्टि संस्कार

जगत्का प्रत्येक वस्तु नाशवान् छन् । यदि आदि छ भने अन्त छ, यदि जन्म भएको छ भने मृत्यु हुन्छ, यसबाट आजसम्म कोही पनि बच्न सकेका छैनन् । तर मृत्यु कुनै भयावह घटना भने होइन यदि आफ्नो जीवनको सम्पूर्ण दायित्व वहन गरेर गुरु चरणमा रहँदै मृत्युबाट अमृत्युको यात्रातर्फ जाने क्रिया सम्पन्न भएको छ भने । देह त्यागको क्रिया मृत्यु होइन, मुक्तिपथको द्वार हो ।

मृत्युपश्चात् जब आत्मा शरीरबाट बाहिर निस्कन्छ तब त्यो धेरै समयसम्म असमञ्जसको स्थितिमा रहन्छ यो के भयो भनेर ? एकपटक उसले आफ्ना नातागोता, आफ्ना परिवारजन रोएको, विलाप गरेको देख्दछ । उनीहरूसँग आत्माले कुराकानी गर्न प्रयास गर्छ, तर सक्दैन । त्यो दिवंगत आत्मालाई यो कुरा बुझ्न धेरै समय लाग्छ कि उसको पार्थिव शरीर अब छुटिसकेको छ अर्थात् मृत्युजस्तो घटना घटिसकेको छ ।

वास्तवमा अझै पनि त्यो आत्माको मोह शरीरबाट हटिसकेको हुँदैन जबसम्म त्यसको पार्थिव शरीरको अन्त्येष्टि क्रिया गरिँदैन, त्यसलाई जलाइँदैन तबसम्म त्यो आत्माको शरीरसँग आकर्षण रहिरहन्छ । जसको फलस्वरूप ऊ अगाडि बढ्न सक्दैन । जब मृत शरीरलाई जलाइन्छ, आत्मालाई यो अनुभव हुन्छ कि शरीर दग्ध भए पनि उसको अस्तित्व छ । यो कुराले उसमा असीम शान्तिको अनुभव हुन्छ र त्यो निर्द्वन्द्व भएर परालौकिक पथमा गमन गर्न गतिशील हुन्छ ।

हिन्दु शास्त्रानुसार मरण भएको तेह्रौँ दिनसम्म आत्मा आंशिक वा पूर्णरूपमा घर-परिवारको सम्पर्कमा रहिरहन्छ, यो अन्तरालमा परिवारजनद्वारा दिइएका दान, ब्राह्मण भोजन, तर्पण आदि कर्मद्वारा मृत आत्माको लागि आनन्दको सञ्चार हुन्छ कि उसलाई उसको वंशद्वारा सम्मान प्राप्त भइरहेको छ । यी क्रियाहरूमा केही त्रुटि हुँदा आत्मामा क्लेश हुन्छ । त्यसैले अन्त्येष्टि संस्कार पूर्ण भावाञ्जलि व्यक्त गरेर सम्पन्न गर्नुपर्छ । यसको परिणामस्वरूप त्यो मृत आत्माको आशीर्वाद प्राप्त हुन्छ । वेदमा पितृलाई देवताहरूको श्रेणीमा राखिएको छ, पितृदेव भनिएको छ, उनीहरूलाई सोही प्रकार अर्घ्य आदि दिनुपर्छ ।

जसरी गर्भाधान संस्कारको लागि मातापिताद्वारा एक नयाँ व्यक्तिको आह्वान गरिन्छ र उसको स्वागतार्थ विविध क्रिया गरिन्छ, त्यसरी नै त्यो मनुष्यको बिदाइ गर्ने क्रममा उसको अन्तिम संस्कार उसको रक्तांश, उसका आत्मज पुत्रले गर्दछन् । यो नै विधिको विधान हो ।

**जय गुरुदेव !**

# आत्मिक निवेदन

आत्मीय पाठकवर्ग,

'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध, पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ । भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ । तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईँहरुबाटै भइसकेको छ । पत्रिकालाई युगौँ-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईँ, हाम्रै काँधमा आएको छ ।

प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ । अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौँ ।

पत्रिकाको बिक्री मूल्य रु. ३०/- मात्र भएकोले तपाईँले कम्तिमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ । तपाईँको घर, टोल, छिमेक वा नातागोतामा कहीँ पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताका लागि प्रेरित गर्न सक्नुहुन्छ ।

यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनहरुलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ । यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ ।

यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो । यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तिमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौँ ।

यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौँ ।

वार्षिक सदस्यताको लागि रु. ३५०/- (अक्षरेपी रु. तीन सय पचास मात्र) सिद्धाश्रम शक्ति केन्द्र, काठमाडौँ, नेपालको नाममा खिचिएको बैंक ड्राफ्ट, चेक वा नगद हामीलाई पठाउनुहोस् । त्यसपछिको बाँकी काम हामी गर्नेछौँ ।

अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौँ एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौँ । यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौँ ।

संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईँको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ । त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौँ र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौँ ।

पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो ।

अस्तु ।

# मेरो गुरुवर

खोजिरहेकी थिएँ गुरुवर तिमीलाई
तड्पिरहेकी थिएँ मेरो प्रभुलाई नपाउँदा ।
खोजी गरेँ प्रत्येक मठ-मन्दिरमा तिमीलाई
धेरै खुशी छु म आज मेरो गुरुवरलाई पाउँदा ।।
खुशीले उर्लेर आए करुणाका वेगहरु
सदा-सर्वदा पूज्न पाऊँ तिम्रै पाउ भनी ।
पखाल्न सकूँ मेरा मनभित्र भएका मैलाहरु
अटल श्रद्धा भक्ति लिएर हर जन्ममा प्रिय शिष्य बनी ।।
तिमी नै हौ मेरो दिलको सहारा
कसलाई भनूँ म मेरो मनको व्यथा ।
तिमी नै हौ मेरो जगतपिता
तिमी बिना छ शून्य यो जीवन सारा ।।
तिमीले देखाएको बाटोमा हिंड्न सकूँ म
आध्यात्मिक युगको लागि बलियो खम्बा बन्न सकूँ म ।
तिम्रै पाउमा गुरु मन्दिर देख्न सकूँ म
मायाजालको बन्धन तोडी तिम्रै चरणमा आउन सकूँ म ।।
हरपल तिम्रै दर्शन पाउन सकूँ म
मनको मन्दिरमा सदा तिमीलाई राख्न सकूँ म ।
अज्ञानी छु गुरुवर ज्ञानरुपी प्रकाश देऊ
तिम्रै थिएँ तिम्रै हुँ गुरुवर शरणमा लेऊ ।।

जय गुरुदेव !

–पार्वती तिमिल्सिना
मालेपाटन, पोखरा



**मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी नेपालकै पहिलो रेडियो कार्यक्रम**

**गोरक्ष निखिल सन्देश**

gnsandesh@ssk.org.np

| स्थान | समय | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| काठमाडौँ | सोमबार बिहान ७:००–८:०० | रेडियो सिटी एफ एम | ९८.८ |
| पोखरा | सोमबार बिहान ५:०५–५:४५ | माछापुच्छ्रे एफ एम | ९१ |
| चितवन | सोमबार बिहान ५:००–५:४० | कालिका एफ एम | ९५.२ |
| बनेपा | सोमबार बिहान ६:००–६:३० | मध्यपूर्व एफ एम | १०४ |
| सुर्खेत | सोमबार बिहान ५:१५–५:४५ | रेडियो भेरी एफ एम | ९८.६ |
| प्युठान | सोमबार बिहान ५:३०–६:०० | माण्डवी एफ एम | ९७ |
| गोरखा | सोमबार बिहान ५:००–५:३० | रेडियो गोरखा एफ एम | ९२.८ |
| भैरहवा | बिहीबार बिहान ५:००–५:४५ | रूपन्देही एफ एम | १०२ |
| दाङ घोराही | बिहीबार बिहान ५:३०–६:०० | रेडियो मध्यपश्चिम एफ एम | ९१.४ |
| पाल्पा | बिहीबार बिहान ५:००–५:३० | रेडियो मुक्तिनाथ एफ एम | ९०.८ |
| सिन्धुली | बिहीबार बिहान ५:००–५:३० | सिन्धुलीगढी एफ एम | १०३.६ |
| दाङ लमही | शुक्रबार बिहान ५:३०–६:०० | रेडियो देउखुरी एफ एम | १०५.८ |
| पोखरा | बिहीबार बिहान ५:३०–६:०० | रेडियो सराङ्कोट एफ एम | १०४.६ |
| दमौली | बिहीबार बिहान ५:२५–५:५५ | दमौली एफ एम | ९४.२ |
| कोहलपुर | बिहीबार बिहान ५:३०–६:०० | कोहलपुर एफ एम | १००.२ |
| सल्यान | बिहीबार बिहान ५:००–५:३० | रेडियो सल्यान एफ एम | १०१ |

तान्त्रिक साधना
तान्त्रिक ध्यान

मानव जीवनको
वास्तविक ज्ञान

# ध्यान ! ध्यान !! ध्यान !!!

परमपूज्य सदगुरुदेवहरुको असीम कृपाले सिद्धाश्रम शक्ति केन्द्रमा विभिन्न तहका तान्त्रीक ध्यानका कक्षाहरु सञ्चालन भइरहेको हुनाले उक्त ध्यानका कक्षाहरुमा प्रवेशका लागि केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरुमा सम्पर्क राख्नुहोला ।

## सिद्धाश्रम शक्ति केन्द्र

बसुन्धरा, काठमाडौं ।

# संस्कार

'संस्कृत' शब्दको जसरी व्युत्पत्ति हुन्छ त्यसैगरी 'संस्कार' शब्दको पनि हुन्छ र यसको अर्थ हुन्छ– शुद्धिकरण ।

'सम्' उपसर्गपूर्वक 'कृञ्' धातुबाट धञ् प्रत्यय तथा सुट्को योगबाट 'संस्कार' शब्द बन्दछ । एउटा कोरा ढुङ्गा (पत्थर) लाई अनेक प्रकारबाट, नाना विधिले सफा गर्दा गर्दा अत्यन्त चम्किलो हीरामा परिणत गराइन्छ र अत्यन्त मूल्यवान् बन्दछ । त्यस्तै मानव शरीर, मानव मन र मानव मस्तिष्कलाई अपौरुषेय वेदशास्त्रले विधान गरेका अनेकौँ प्रकारका कर्मद्वारा, योगद्वारा, त्यागद्वारा, तपस्याद्वारा, उपासनाद्वारा शुद्धिकरण गरिन्छ र एउटा कोरा मनुष्यलाई सज्जन, साधु, सन्त, महात्मा, महान् पुरुषमा अनि क्रमश: योगीमा, भक्तमा र ज्ञानीमा विकसित गराइन्छ, गरिन्छ । यही हो संस्कारको महिमा, महत्ता, उपयोगिता एवं उपादेयता ।

संस्कृतस्य हि दान्तस्य नियतस्य यतात्मन: ।
प्राज्ञस्यानन्तरा सिद्धिरिहलोके परत्र च ॥

(महाभारत, शान्ति. २३५)

जसको विधिवत् वैदिक संस्कार सम्पन्न भएर संस्कृतस्वरूप कायम गरिएको छ; जसले वैदिक नियमपूर्वक तपस्या गरेर मन र इन्द्रियहरूमाथि विजय प्राप्त गरिसकेको छ त्यस्ता विज्ञ, संस्कारित पुरुषका लागि इहलोक र परलोकमा कहीँ पनि सिद्धि प्राप्त हुनका लागि कुनै प्रकारको कठिनाइ हुँदैन, समय लाग्दैन ।

'वेदो धर्म मूलम्'; 'आचार: परमो धर्म:'

मानव जीवनमा आचार-विचार, विधि-व्यवहारको ठूलो भूमिका छ । यो नै संस्कारको मूल घटक हो । वेद नै हाम्रो धर्मको मूल स्रोत हो ।

'आचारवान् पुरुषो वेद:'

आफ्नो वैदिक आचारमा रहेको मानिसले नै यथार्थ तत्त्वज्ञान प्राप्त गर्न सक्छ । आचारभ्रष्ट, संस्कारहीन मानिसलाई वेदले पनि पवित्र बनाउन सक्दैन । त्यसैले वेदव्यास भन्नुहुन्छ– आचारहीनं न पुनन्ति वेदा:

(विष्णुधर्मोत्तर ३।२५१।५)

संस्कारहरूकी अधिष्ठात्री देवी वेदमाता गायत्री हुन् । गायत्रीको विधिपूर्वक अनुष्ठान गरिन्छ गुरुकुलमा । वैदिक परम्पराको गुरुकुलमा दिने शिक्षाको संस्कारबाटै ब्रह्मचर्याश्रमदेखि लिएर संन्यास आश्रमसम्मका सबै प्रकारका आचार-विचारको, विधि र व्यवहारको जग बसालिन्थ्यो । वर्णाश्रम व्यवस्था हाम्रो वैदिक संस्कारअनुसार मानिएको छ र यसमा एकातिर व्यावहारिकता र वैज्ञानिकता पाइन्छ भने अर्कोतिर आध्यात्मिकता त प्रचुर मात्रामा पाइन्छ नै ।

जन्मनाज्जायते शूद्र: संस्काराद्द्विज: उच्यते ।
वेदपाठी भवेद् विप्र: ब्रह्मजानाति ब्राह्मण: ॥

जन्मनासाथ सबै शूद्र नै हुन्छन् । संस्कार गरेपछि तिनलाई द्विज (दुईपटक जन्मेको– पहिलो आमाको गर्भबाट, दोस्रो संस्कारबाट भनिन्छ । वेदको विधिपूर्वक अध्ययन गरेपछि तीनै विप्रनामले पुकारिन्छन् र ब्रह्मज्ञानी गुरुबाट ब्रह्मज्ञानको उपदेश पाएर आफूले ब्रह्मात्मैक्यबोध गरेपछि ब्राह्मण बन्दछन् ।

यो हो संस्कारको महत्त्व र महिमा । वास्तवमा विधिपूर्वक संस्काररूपी साधनलाई अवलम्बन गरेर वेदोक्त अद्वैतात्म ज्ञानद्वारा आफूलाई ब्रह्ममा प्रतिष्ठित गराउनु नै सर्वोपरि संस्कार हो । यही नै मानव जीवनको सार्थकता र परमपुरुषार्थ मोक्ष प्राप्त गर्ने उपाय पनि हो । संस्कारद्वारा नै आत्मशुद्धि अर्थात् अन्त:करणको शुद्धि हुन्छ । संस्कारले मानिसलाई पाप र अज्ञानरूपी अन्धकारबाट पुण्य र ज्ञानरूपी उज्यालोमा प्रवेश गराइदिन्छ ।

संस्कार मुख्यत: दुई प्रकारका हुन्छन्– १. मलापनयन र २. अतिशयाधान । यसैलाई अर्को शब्दमा यसरी पनि भनिन्छ – १. दोषापनयन र गुणाधान । मनुस्मृतिअनुसार त संस्कारका तीन रूप हुन्छन् । माथिका दुईका अतिरिक्त ३. हीनाङ्गपूर्ति पनि एक मानिएको छ ।

हाम्रो जीवन संस्कारमय छ । संस्कार परिस्कार गर्दै गर्दै हामी वर्तमानमा छौँ र यो क्रम मृत्युपर्यन्त चलिरहन्छ । खाँदा, बस्ता, हिँड्दा, बोल्दा, पढ्दा हामी संस्कार चाहन्छौँ– यो हाम्रो स्वभाव हो, प्रकृति हो । यज्ञमा स्थापना गरिने अग्निको समेत गर्भाधानादि गर्दछौँ । देवतालाई पनि संस्कार (प्राणप्रतिष्ठा) नगरी हामी पूजा गर्दैनौँ भने संस्कार नै हाम्रो जीवन हो ।

१. ऐनामा लागेको धूलो पुछपाछ पारेर उज्यालो बनाउनु, चामललाई निफन-नाफन गरी भुस मिल्काउनु, ढुङ्गा, बीयाँ केलाउनु आदि जस्तै सामान्यत: स्नान, शौच आदिद्वारा शुद्ध गर्नु मलापनयन संस्कार हो । यसैलाई दोषापनयन पनि भनिन्छ ।

२. धोएको लुगालाई आइरन लगाएर टलक्क टल्काउनु, काठलाई खाक्सी लगाएर चिल्लो बनाउनु जस्तै उपनयन, चूडाकर्मजस्ता संस्कारद्वारा ज्ञानका लागि योग्य बनाउनु गुणाधान वा अतिशयाधान संस्कार भनिन्छ ।

३. हीनाङ्गपूर्ति संस्कार भनेको कुनै कुराको अभाव थियो भने त्यसमा संस्कारद्वारा पूर्ति गरिदिनु हो । भाँचिएको गोडामा प्लेट हालेर भए पनि तन्दुरुस्त बनाइदिनु, शल्यक्रिया गरेर आँखा बदलिदिनु र देख्न सक्ने बनाइदिनु जस्तै ठूला-ठूला यज्ञको संस्कारद्वारा मनुष्यलाई परमात्माको नजिक पुऱ्याइदिन, पापीलाई पुण्यात्मा, पुण्यात्मालाई महात्मा बनाउनमा सहयोग गर्नु हीमाङ्गपूर्ति संस्कार हो ।

# ...दृष्टिले हेर्दा

-प्रा. शिवगोपाल रिसाल

संस्कारका सङ्ख्याका विषयमा विभिन्न ऋषिहरूले आ-आफ्ना सिद्धान्तअनुसार निर्णय गरेका छन् । गौतमस्मृतिमा ४८ संस्कार बताइएको छ भने महर्षि अङ्गिराले २५ संस्कार निर्दिष्ट गरेका छन् । महर्षि वेदव्यासले निम्नलिखित १६ संस्कारको प्रतिपादन गरेका छन्–

गर्भाधानं पुंसवनं सीमन्तो जातकर्म च ।
नामक्रियानिष्क्रमणेऽन्नाज्ञनं वपनक्रिया: ॥
कर्णवेधो व्रतादेशो वेदारम्भक्रियाविधि: ।
केशान्त: स्नानमुद्‍वाहो विवाहाग्निपरिग्रह: ॥
त्रेताग्निसंग्रहश्चेति संस्कारा: षोडश स्मृता: ।
(व्यासस्मृति १।१३-१५)

१. गर्भाधान २. पुंसवन ३. सीमन्तोन्नयन ४. जातकर्म ५. नामकरण ६. निस्क्रमण ७. अन्नप्राशन ८. वदन क्रिया (चूडाकरण) ९. कर्णभेद १० व्रतादेश (उपनयन) ११. वेदारम्भ १२. केशान्त (गोदान) १३. वेदस्नान (समावर्तन) १४. विवाह १५. विवाहाग्नि-परिग्रह र १६ त्रेताग्निसंग्रह ।

कुनै आचार्यले मृतशरीरको दाहसंस्कार अर्थात् अन्त्येष्टिक्रियालाई एक थप संस्कार मानेका छन् । यसैलाई पितृमेध, अन्त्यकर्म, श्मशानकर्म, अन्त्येष्टि पनि भन्दछन् ।

गर्भाधानदेखि लिएर अन्त्येष्टिसम्म संस्कारै-संस्कारले संस्कारित हाम्रो शरीर, मन र मस्तिष्कले वैदिक कर्म र धर्मलाई उपासना र ज्ञानद्वारा आत्मसात् गराएर आफ्नो मानव जन्मलाई धन्य र सार्थक बनाएको छ । संस्कारसारसर्वस्व हो भगवद्‍भक्ति, ज्ञानप्राप्ति र मोक्षलाभ ।

हाम्रो संस्कारले 'मातृदेवो भव । पितृदेवो भव । आचार्यदेवो भव । अतिथिदेवो भव ।' भन्न र तद्‍अनुकूल आचरण गर्न सिकाउँछ 'सत्यं वद । धर्मं चर' आदि उदात्त चिन्तन र व्यवहार गर्न वैदिक संस्कारले प्रेरणा दिन्छ । भगवद्‍भक्ति हाम्रो संस्कारको फल हो, भक्तिको परिणाम ज्ञान र त्यसको परिणाम मुक्ति हाम्रो अन्तिम अभीष्ट हो, लक्ष्य हो । हामीले खोजेको हो– आनन्द, अखण्ड, आनन्द, निरतिशय आनन्द । जस्तो प्रकृति हुन्छ, त्यस्तै प्रवृत्ति हुन्छ– त्यसैबाट प्राप्ति हुन्छ । हाम्रा संस्कारहरूले यही नै सिकाउँछन् । कुनै कर्मद्वारा पाप, दुष्टता, अज्ञान, भ्रमज्ञान आदिको अपनयन हुन्छ भने कुनैद्वारा पवित्रता, पुण्य, विद्या आदि अतिशयताको आधान गरिन्छ । बाहिरबाट थपिएको फोहोर, अज्ञान, माया आदिलाई संस्कारद्वारा पन्छाएर आफ्नो निजी स्वभावसिद्ध स्वत: प्राप्त अनन्त-आनन्द-साम्राज्य-सिंहासनमा समासीन गराउनु नै वैदिक धर्म र दर्शनको मूल उद्देश्य हो । यही हाम्रो संस्कृति पनि हो ।

हामी पूर्वजन्ममा विश्वास गर्दछौँ, पुनर्जन्ममा पत्यार गर्दछौँ । हामी भगवान्‌को भक्ति गर्दछौँ– भगवान् सगुण-निर्गुण, साकार-निराकार, सविशेष-निर्विशेष जसरी भावना गऱ्यो त्यस्तै भइदिनुहुन्छ । हाम्रो दर्शन उदार, हामी उदार छौँ । हाम्रो वैदिक संस्कारले यसै भन्न यस्तै गर्न अनि यस्तै हुन सिकाएको छ ।

संस्कारहरूद्वारा विभूषित भएपछि नै व्यक्तिको मूल्य र सम्मान बढ्दछ । त्यसैले हाम्रो समाजमा संस्कारको माहात्म्य बढेको हो । संस्कार र संस्कृति दुवैको अर्थ हो धर्म र गन्तव्य हो मोक्ष । संस्कार भएन भने त मनुष्य पशुसमान हुन्छ । आज हामी वैदिक सनातनीहरू जे छौँ त्यो हाम्रो अतीतको सुसंस्कारको परिणाम हो र हामी जे जस्तो हुन सकेका छैनौँ त्यो पनि संस्कारहीनताको परिणाम हो । हाम्रो चरित्रमा संस्कारकै प्रत्यक्ष वा परोक्षरूपमा प्रभाव पर्ने भएको हुनाले संस्कारहरूको समष्टिस्वरूप नै चरित्र हो । मानवको चरित्र नै उसको जीवनको आधारशिला हो, मेरुदण्ड हो । वेदका उदात्त भावनाले मानवलाई धरतीमा नै देवतुल्य हुने सन्देश दिएका छन् । हाम्रो संस्कार र संस्कृतिको उद्‍घोष छ– 'आत्मवत् सर्वभूतेषु' 'वसुधैव कुटुम्बकम्' सम्पूर्ण प्राणीलाई आफूजस्तै मान । धरती (धरतीका सम्पूर्ण जीव) लाई आफ्नै आफन्तवत् व्यवहार गर । ऊर्ध्वमुखी अध्यात्म–जीवन निर्वाह गर्नका लागि संस्कारको गरिमामय भूमिका छ । अत: संस्कार नै मनुष्यको आध्यात्मिक पथमा हिँड्नका लागि पाथेय (बाटो खर्च) हो । फूलमा भएको सुगन्धझैँ, फूलमा भएको मिठासझैँ साधु–सन्त-सज्जनका वाणीमा भएको कल्याणकामना सहितको प्रियताझैँ, चन्द्रमामा रहेको शीतलताझैँ मानव जीवनमा संस्कारको महानता सुस्पष्ट छ ।

वेदान्त दर्शनअनुसार भन्ने हो भने उपनिषद् विद्याले अज्ञान किंवा अविद्याको दोषापनयन मात्र गर्दछ, गुणाधान गर्ने होइन । कल्पित अविद्या, अज्ञान, भ्रमज्ञान हटाउनु मात्र गुरु-शास्त्रको प्रयोजन हो, ब्रह्म त सदासर्वदा प्राप्त नै थियो । त्यसैले ब्रह्मज्ञान भनेको प्राप्तको प्राप्ति हो, निवृत्तिको निवृत्ति हो । प्रेममार्गमा लाग्नेका लागि र श्रेयमार्गमा लाग्नेका लागि पनि हाम्रा संस्कारहरूले मार्गनिर्देश गरेका छन् । आ-आफ्ना रुचिअनुसार संस्कारलाई स्वीकार गरी सम्पादन गर्नुपर्छ ।

पूर्वजन्मको संस्कारले पनि यस जन्ममा ठूलो भूमिका खेलेको हुन्छ । साथसाथै सत्सङ्ग, सत्‌शास्त्रको अभ्यासद्वारा नयाँ संस्कार पनि बनाउन सकिन्छ । अशुभ संस्कारलाई अपसारण गरेर शुभसंस्कार बनाउँदै लानु र अत्यन्त कठोर परिश्रम र तपस्याद्वारा, बोधद्वारा संस्कारबाटै उपराम हुन ज्ञानार्जन अर्थात् अद्वैतात्म ज्ञानद्वारा मोक्षलाभ गर्नु नै मानव जीवनको र वैदिक संस्कृति र दर्शनको सर्वोत्कृष्ट सन्देश हो । हामी शुभ-संस्कारद्वारा संस्कारित बनौँ र जन्म-मृत्युको चक्रबाट पार पुगौँ–यसैमा हाम्रो आत्यन्तिक कल्याण छ ।

-शिवमस्तु-

'शिव-मन्दिर'
शान्तिकुना, ललितपुर-५

# श्री गोरख महापुराण

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौं । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल, गोर्खा) स्वयंको नै हुनेछ ।

## पचपन्नौँ भाग

बाबु पद्मनाथ ! दिव्य देह प्राप्त गरेर दिव्य जीवन प्राप्त गर्नको लागि ब्रह्मचारी रहन परम आवश्यक छ । साथै, विचार शुद्धि र बोधशक्तिको परिशीलनको पनि आवश्यकता छ । पवित्र जीवन चिन्तारहित एकाग्रता दिव्यरूपबाट सहायक हुन्छ । एकाग्रता आउनाले चित्त अन्तर्मुखी हुन जान्छ । सूक्ष्म ध्यानबाट प्रवीणता आउँछ तथा चित्तको शक्तिको विकास पनि हुन्छ र समाधि लगाउने इच्छा पनि जागृत हुन्छ । त्यो समाधि प्रचलित जड समाधिभन्दा भिन्नै हुन्छ । यसबाट चेतना जागृत रहन्छ । स्वनियन्त्रणको सामर्थ्य आउँछ । तर कुण्डलिनी जागरण र प्राण केन्द्रमा जप-संपद हुँदैन । त्यो भावना कार्यकारिणी हुँदैन । विशुद्ध तत्त्वज्ञानको लागि गुप्त शक्तिहरूको प्राप्तिको यो नै एक उपाय हो, उसको भौतिक देहको अर्को दोस्रो मार्ग छैन । कुनै समयका प्रभुदेव नामक एक महासिद्धको नजिक प्रकट भएर उनको अगाडि आफ्नो भूतजय र वज्रागतिको मौन प्रदर्शन गर्नुभयो । प्रभुदेवको मतानुसार, वज्रागति-लाभ सम्यक सिद्धि थिएन । देह स्थिरता भएर पनि जबसम्म मायाको निवृत्ति हुँदैन तबसम्म परामुक्तिको कुनै सम्भावना छैन । उनको मतानुसार क्षर (नाशवान्) भूत समूह एवं अक्षर (अविनाशी) कूटस्थको अधीश्वर महादेवको प्रतिभक्ति नै परामुक्तिको उपाय हो । यस भक्तिको उदय नभइकन देह सिद्ध भएर पनि त्यो परमसिद्धि मानिँदैन । श्री गोरखनाथ भन्नुहुन्छ– मैले उनीसँग भनैं कि मेरो शरीरमा तीखो धारवाला तरवारको चोटबाट पनि मलाई कुनै नोक्सान हुँदैन । तर प्रभुदेवको मतानुसार छेदन-भेदनद्वारा कार्य सिद्धिको परीक्षा आसुरीक्षक परीक्षा हो । यसको बावजुद प्रभुदेवले मेरो शरीरमा खड्ग प्रहार गर्नुभयो तापनि मेरो कुनै अङ्ग छिन्नभिन्न भएन । केवल शरीरमा खड्गको चोटबाट पहाडजस्तो आवाज आयो । प्रभुदेवले भन्नुभयो- कायासिद्ध योगी कुनै पनि ठूलोभन्दा ठूलो पीडाको अनुभव गर्दैन । यस प्रकारको योगी जरा (बूढो हुनु) र मृत्युबाट वर्जित हुन्छ । सिद्धयोगी सबै प्रकारको बन्धनलाई चुँडालेर ईश्वरमा पूर्ण समाहित हुन्छ, बुझ्नुभयो गोरखनाथ महाराज ? प्रभुदेवको कुरा सुनेर म पनि परीक्षा लिन तयार भएँ । तरवार लिएर मैले पनि प्रभुदेवको शरीरमा गहिरो चोट लगाएँ । तर चोटमा चोट खाएर पनि प्रभुदेव आकाशतर्फ मुख उठाएर चट्टानजस्तै अटल खडा रहनुभयो । श्री गोरखनाथ भन्नुहुन्छ– बाबु मेरो शरीरमा त उनको चोटबाट आवाज आएको थियो तर उनको शरीरबाट कुनै आवाज पनि निस्केको थिएन र उनको शरीर पनि आकाशजस्तै अटल रह्यो । तब प्रभुदेवले भन्नुभयो– गोरखनाथ कार्य धनी भवति सापि धनैव माया ।

## छपन्नौँ भाग

बाबु पद्मनाथ ! भारत देशमा विद्वान्हरूको कमी छैन । ठूला-ठूला ज्ञानी-ध्यानी, सन्त महात्मा सदा नै रहँदै आएका छन् । दत्तात्रेयजी पनि श्री विद्याका प्रधान उपासकहरूमा एक हुनुहुन्छ । उहाँ पनि दुर्वासाजस्तै नै अनुसूयाको गर्भबाट उत्पन्न हुनुभएको थियो । प्रसिद्धि छ कि उहाँले शिष्यहरूको कल्याणको लागि नै श्री विद्याको उपासनाको लागि 'श्री दत्ता संहिता' नामक एक महाविशाल ग्रन्थको रचना गर्नुभएको थियो । पछि श्री परशुरामजीले त्यसको अध्ययन गरेर पञ्चाशत खण्डात्मक सूत्र ग्रन्थको रूपमा त्यसलाई बदलिदिनु भएको थियो । यसपछि सुमेधा मुनिले परशुराम सूत्र तथा दत्ता संहिताको सारांश लिएर त्रिपुरा रहस्यको स्थापना गर्नुभयो । सुमेधा पनि दत्तात्रेयजीजस्तै महाकालीका परम उपासक हुन् । यिनको यस प्रसङ्गबाट मलाई शिवभक्त नन्दीश्वरको याद आउँछ । यिनी पनि श्री विद्याका परम उपासक थिए । जनार्णवमा यिनको उपासित विद्याको उद्धार स्पष्ट देखिन्छ । यिनले लेखेको यस ग्रन्थको नाम कौशिका हो । यो सानो कारिकात्मक ग्रन्थ हो । जगत्प्रसिद्ध उपमन्युले यसको टीका गरेका थिए । नन्दीकेश्वर पनि छत्तीस तत्त्वादी थिए । तर यिनको तत्त्व गणना प्रचलित मतहरूबाट विलक्षण थियो । यिनको मत थियो कि छत्तीस तत्त्वहरूमा सांख्यसम्मत पच्चीस तत्त्व छन् र यी तत्त्वहरूका अतिरिक्त शिव शक्ति, ईश्वर प्राणादि पंचक र गुण सम हुन् । यिनको मतानुसार प्रधान र गुणात्रय अलग-अलग हुन् । धेरै ग्रन्थमा लेखिएको छ कि दुर्वासा मुनि पनि नन्दीश्वरका नै शिष्य थिए । यो पनि ज्ञात हुन आउँछ कि प्रभुदेव पनि दुर्वासा मुनिका सम्प्रदायका नै थिए ।

अब म तिमीलाई सिद्धि रहस्यको बारेमा दुई-चार कुरा सम्झाउँछु– यो स्मरण गर्नु परम आवश्यक छ कि तत्त्व र अर्थ यी दुईमध्येबाट एउटा आश्रय लिएर नै सिद्धि आकार उदय हुन्छ । जागतिक दृष्टिबाट जगत्का प्रत्येक पदार्थको एक स्थान छ । योगीले संयमद्वारा नै ती

पदार्थहरूबाट कार्य सम्पन्न गर्ने गर्छन् । तत्त्वमूलक सिद्धिका पनि दुई प्रकार नै हुन्छन्– एक पग र दोस्रो अपगको नामबाट विख्यात् छन् । पातञ्जल योगमा पनि तत्त्वमय अवस्थाबाट सिद्धि उदय हुने विवरण पाइन्छ । अर्थ विशेषमा योगी आत्म भावनाद्वारा त्यस्तै नै रूप धारण गरेर आफ्नो कार्य सम्पन्न गर्दछन् । जो देवता जो कार्य सम्पन्न गर्दछ योगी त्यसै देवतालाई तादात्म्य गरेर र अद्वैत भाव स्थापन गरेर आफ्नो कार्य सिद्ध गर्दछन् । जसको अर्थ यो भयो कि कुनै पनि तत्त्वमा अद्वैताको अभिनिवंशबाट पनि सिद्धि आउन सक्छ । माहामायाद्वारा एकतीस तत्त्वको अवलम्बन गरेर सिद्धि प्राप्त गर्न सकिन्छ । यी सिद्धिहरूको नाम गुहासिद्धि हो । गुहा शब्द मायाको वाचक शब्द हो । मायातीत शुद्ध विद्या अथवा माता सरस्वती देवीको आश्रय गरेर जुन सिद्धिहरूको उदय हुन्छ त्यसको नाम तत्त्वमूलक परासिद्धि हो । लौकिक कामहरूको लागि जुन सिद्धिहरूको जरुरत हुन्छ तिनलाई अपरा सिद्धि भनिन्छ । परा र अपरा यी दुवै सिद्धिहरू खण्ड सिद्धिहरू हुन्, महासिद्धिहरू होइनन् । यी दुवैभन्दा महासिद्धि श्रेष्ठ हुन्छ । महासिद्धिहरू पनि दुई प्रकारका नै हुन्छन् । पहिलो सकलीकरण र दोस्रोलाई शिवत्वको लाभ । सकलीकरण अवस्थामा योगीलाई भयङ्कर जलनको सामना गर्नुपर्छ । त्यसपछि शान्त शीतलताको अनुभव हुन्छ । जुन समय कालाग्नि योगीको शरीरको पाशहरूलाई जलाउँछ, त्यस समय षड हवादहिको प्रकोप हुन्छ । त्यसबेला पनि भयङ्कर ताप सहनुपर्दछ । यसपछि स्निग्ध अमृत रसबाट योगीको सारा सत्ता नै आप्लावित हुन जान्छ, तब योगी पूर्णरूपले आफ्नो इष्टदेवताको दर्शन गर्दछ । त्यसबेला ऊ शोधित अहंकार योगी सारा विश्व अनुग्राहक (कृपा गर्ने) हुन्छ । यस अमृत प्लावनको नाम नै पूर्णाभिषेक हो । यस्तो अवस्था आएपछि नै योगी जगद्गुरुको पदमा अधिष्ठित हुन्छ । यसप्रकार पूर्णत्व पाएपछि पनि अरू अगाडि बढ्नुपर्छ किनकि यो पनि अपूर्ण स्थिति नै हो । यसपछि नै यथार्थमा पूर्ण ख्यातिको उदय हुन्छ र यसैको नाम शिवतत्त्व हो । यो नै परमशिवको अवस्था हो । वास्तवमा यो नै पूर्ण तत्त्व हो । यस अवस्थामा पूर्ण स्वातन्त्र्य आउँछ । यसबाट केवल इच्छाद्वारा मात्र नै भुवन रचना तथा विश्व रचनाको शक्ति आउँछ । पंचकृत्यकारिताको आविर्भाव यसै समयमा हुन्छ । बुद्धमतमा पनि सुखावतीको रचना पनि अमिताभ बुद्धदेवद्वारा नै भएको थियो र विश्वामित्र आदिको संसार सृष्टिको वर्णन शास्त्रमा छँदैछ । तान्त्रिक र आध्यात्मिक दृष्टिको लक्ष्य पनि यसै पूर्ण अवस्थालाई प्राप्त गर्नु हो । केवल स्वर्गलोक आदि ऊर्ध्वलोक लोकान्तर अथवा निरञ्जन वा मायापति अधिकारीको पद पाउनु नै उद्देश्य होइन । केवल मनुष्य मात्रमा नै यो योग्यतालाई प्राप्त गर्ने सामर्थ्य छ । यही नै तान्त्रिक शक्तिको अपदान हो । यसलाई तुच्छ सम्झनु बडो ठूलो अबुझपन पनि हो ।

क्रमश:

हरि ॐ तत्सत्

# गुरुवाणी

**तिमीहरुलाई कसैले विभूति, बाला, बूटी आदि के-के देलान् के-के, तर म तिमीहरुलाई मृत्यु दिन्छु । म तिमीहरुभित्रको पाखण्ड, सन्देह, तिमीहरुभित्रका कुसंस्कारहरू, कुवृत्तिहरुलाई मृत्यु दिन्छु । म मृत्यु दिन्छु ती ढुङ्गा, माटोलाई जसलाई तिमीले आफ्नो दिमागमा भरेर राखेका छौ । प्रहार गर्नु मेरो स्वभाव हो । तिम्रो चित्तमा, मनमा, हृदयमा जुन कालोपना छाएको छ, म त्यसलाई समाप्त पार्नेछु । त्यसपछि फेरि एउटा नयाँ ढङ्गबाट तिम्रो निर्माण गर्नेछु एउटा अद्वितीय मानवको रूपमा, दुर्लभ शिष्यको रूपमा र एउटा देवदूतको रूपमा । म आफूभित्रको प्रकाशले तिमीहरुलाई संस्कारित गर्नेछु जसबाट एउटा नयाँ सूर्य उदाउन सकोस् ।**

# जीवन-प्रेम

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'प्रेम धार तलवार की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

'बुद्ध'ले ध्यानको माध्यमबाट पूर्णता प्राप्त गर्ने प्रयास गरे, जीवनको त्यस चिन्तनलाई, धारणालाई प्राप्त गरे तर उनको अनुहारमा कुनै प्रकारको मुस्कुराहटको रेखा व्याप्त हुन पाएन... र त्यो बाटो आफैमा पूर्ण हुँदाहुँदै पनि आनन्ददायक बनेन । त्यसैले पूर्ण षोडश कलापूर्ण उनलाई पनि मानिँदैन । शास्त्रमा हामीले बुद्धलाई अवतार मान्छौँ, यदि हामीले रामलाई अवतार मान्छौँ, कृष्णलाई अवतार मान्छौँ भने बुद्धलाई पनि अवतार मान्छौँ, निश्चय नै उनी ज्ञानको क्षेत्रमा अद्वितीय थिए, उनले जुन बुद्धत्व प्राप्त गरे त्यो आफैमा पूरा संसारमा एउटा नवीन चेतना हो, नवीन ज्ञान हो, नवीन विचाराधारा हो ।

तर जीवनको रस भनेको त मुस्कुराहट हो, मस्ती हो, आनन्द हो, प्रेम हो, तृप्ति हो... र यो तृप्ति कृष्णले सिके तर उनलाई मानिसले बुझ्नै सकेनन् किनकि जो षोडशकला पूर्ण हुन्छ उसको प्रत्येक क्षण आफैमा अलग हुन्छ । जो षोडशकला पूर्ण व्यक्तित्व हुन्छ उसका हात, पाउ, नाक, कान त ठीक सामान्य मानिसका जस्तै नै हुन्छन् । त्यसैले ऊ हाम्रो जीवनको धेरै नजिक अनुभव हुन्छ... निकट अनुभव भएको कारण मानिसहरूले कृष्णका क्रियाहरूलाई बुझ्न सकेनन्... त्यसैले कसैले उनीमाथि लाञ्छना लगाए, कसैले उनलाई गाली गरे, कसैले कृष्णलाई के भने, कसैले के । तर यति हुँदाहुँदै पनि मानिसहरू यो मान्न बाध्य भए कि उनी पूर्ण योगी छन्, ज्ञानी छन्, उनीहरू यो मान्य बाध्य भए कि कृष्ण आफैमा पूर्णता प्राप्त व्यक्तित्व हो, र यो मान्न बाध्य भए कि श्रीमद्भगवद्गीताजस्तो अपूर्व ग्रन्थलाई केवल कृष्णले मात्र प्रदान गर्न सक्दछन्... किनकि उनको हृदयको रस सुकेको छैन... उनको हृदयमा एउटा फुहार, उनको हृदयमा एउटा विचारधारा छ र सबैभन्दा ठूलो कुरा त यो हो कि उनको हृदयमा एउटा तरङ्ग छ, एउटा लहर छ, हाँसो छ, मुस्कुराहट छ, र उनको हृदयमा सबैभन्दा ठूलो कुरा प्रेम प्राप्त गर्ने र प्रेम दिने क्रिया छ ।

र, मैले पहिले पनि भनिसकेको छु– प्रेम वासना होइन, र यदि वासना भएको भए त कृष्ण मथुराबाट बारम्बार वृन्दावन भाग्थे होलान्, बारम्बार गोकुलमा गएर गोपीहरूसँग ठट्टा गर्थे

होलान् । जब उनी वृन्दावनबाट हिँडे, जब उद्धवले उनलाई लिन आए, जब अक्रूरले उनलाई आउन आमन्त्रण दिए तब उनी तुरुन्त हिँडिहाले, एक क्षण पनि गोपीहरूतिर हेरेरन्, चिन्तन गरेनन्, किनकि उनलाई केवल प्रेम गर्न आउँदथ्यो–

–कुनै प्रकारको वासनाको गन्ध, वासनाको दुर्गन्ध उनको जीवनमा थिएन ।

–त्यसैले कृष्णलाई पूर्ण पुरुष मानिएको छ ।

–त्यसैले कृष्ण मनुष्यताको धेरै नजिक छन् ।

–त्यसैले कृष्णमा जहाँ योग छ, समाधि छ, जहाँ चिन्तन छ, त्यहाँ पूर्णता पनि छ ।

–जीवनको तृप्ति छ, जीवनको मुस्कुराहट छ, एउटा बगेको झरना छ ।

–जसमा पूर्णता प्राप्त हुन सक्छ ।

–त्यसैले जीवनको आधार प्रेम हो ।

म तिमीलाई प्रेमको सागरको यात्रामा एउटा आनन्द र तृप्ति दिने क्रिया बताउँछु । त्यसैले म भन्छु कि प्रेम तरवार हो, तरवारको धार हो जसमा हिँड्नाले पाउ रगताम्य हुन जान्छ । यो यति सरल र सजिलो बाटो होइन । यो घुम्ती यस्तो होइन कि जसको तल फूल ओछ्याइएको छ... प्रेम गर्नु अधिक कठिन छ, प्रेम गर्नु अत्यन्तै पीडाजनक छ । पूर्ण हृदयका साथ हृदयलाई जोडेर प्रेम गर्ने क्रिया त कसै-कसैलाई मात्र आउँदछ ।

यो क्रिया मीरालाई थाहा थियो । मीरामा कुनै वासना थिएन । आज यतिका वर्ष बितेपछि पनि कसैले उनीमाथि लाञ्छना लगाउन सक्दैनन् कि मीरा वासनायुक्त थिइन् । उनीमाथि कुनै प्रकारको पनि आक्षेप लगाउन सकिँदैन । यद्यपि उनी महलबाट आएकी थिइन् । उनले घुम्टो झिकिदिइन्, यद्यपि उनले घुंघुरु बाँधेर नाचिन्, यद्यपि उनी साधुसन्तहरूको साथमा रहिन् । यसको बावजुद पनि उनीमाथि कसैले औँला ठड्याउन सक्दैन किनकि उनले प्रेम त गरिन्, उनले प्रेमको सुगन्धलाई त झेलिन्, उनले हृदयको कमललाई विकसित त गरिन्, तर कुनै प्रकारले पनि उनमा वासनाको गन्ध आउन पाएन ।

–र मैले तिमीलाई त्यही प्रेमतिर अग्रसर गराइरहेको छु किनकि यदि त्यो प्रेम जीवनमा छैन भने, यदि तिम्रो हृदयमा सुगन्ध विकसित भएको छैन भने, यदि तिम्रो हृदयमा प्रेमको पुष्प विकसित भएको छैन भने त जीवनमा फेरि साधना पनि हुन सक्दैन, त्यो जीवन ठूटो बनेर रहन्छ र सारा जीवन बेस्वाद हुन जान्छ, बेजान हुन जान्छ ।

– र यसको आशय यो होइन कि तिमी कुनै केटीसँग प्रेम गर्न लाग । यसको आशय यो होइन कि तिमी आफ्नी पत्नीलाई छोडेर कुनै अरू केटीमा अनुरक्त हुन जाऊ । म भन्छु– यस्तो प्रेम तिमीले गुरुका साथ गर्नुपर्दछ, गुरुमा आफैलाई लीन गर्नुछ किनकि गुरु आफैमा एउटा प्रेमको प्रतीक हो । तिमी शिष्य हौ भने गुरुमा आफैलाई लीन गर्ने क्रियालाई जान, आफैलाई त्यसमा आत्मसात् गर– उहाँको प्रेममा, उहाँको चिन्तनमा, उहाँको विचारधारामा । यस्तो महसुस होस् कि उहाँबिना यो जीवन व्यर्थ छ, बेकार छ, र यस्तो स्थिति जब तिमीलाई प्राप्त हुन जान्छ तब तिम्रो जीवनमा आनन्दको पूर्णता र परितृप्तता आउन सक्छ ।

म यस प्रकारको गुरु बन्न चाहन्न जसले तिमीलाई ठूटो बनाओस् । तिमीलाई बेजान र स्वादविहीन बनाउने गुरु पनि बन्न चाहन्न म । तिमीलाई बिरानो जङ्गलमा भौँतारिन लगाउने गुरु पनि म बन्न चाहन्न... र तिमीलाई यस्तो शिष्य पनि बनाउन चाहन्न कि तिमी तातो मरुभूमिमा आँखा बन्द गरेर समाधितर्फ अग्रसर होऊ । म त तिमीलाई मुस्कुराहटले भरिएको शिष्य बनाउन चाहन्छु, म तिमीलाई मुस्कुराहटयुक्त शिष्य बनाउन चाहन्छु, म तिमीलाई अगाडि बढ्ने क्रिया सिकाउन चाहन्छु, म तिम्रो पूरा जीवनलाई आनन्द र उमङ्ग भरिदिन चाहन्छु किनकि त्यस रसको आनन्द मैले चाखेको छु । मैले आफ्नो इष्टसँग प्रेम गरेको छु, मैले आफ्नो गुरुलाई प्रेम गरेको छु, मैले आफ्नो ईश्वरसित प्रेम गरेको छु... मैले त्यस प्रेमको आनन्दलाई अनुभव गरेको छु कि प्रेम एउटा यस्तो चीज हो जहाँ मानिसहरूको अफवाह, मानिसहरूको विचारधारा, मानिसहरूको चिन्तन आफैमा केही पनि होइन । किनकि–

तन्हाई में भी अश्कों को सहलाए नहीं जाते,<br>
लहूलुहान कदमों को बहकाए नहीं जाते ।<br>
मुहब्बत में जमाना छील दे जिस्म को फिर भी,<br>
जिगर के जख्म चौराहे पर दिखलाए नहीं जाते ।

मानिसहरूले तिमीमाथि औँला ठड्याउलान्, मानिसहरूले तिमीलाई कैयौँ कुरा भन्लान्, तर पीडा तिमीले आफ्नो हृदयमा झेल्नुपर्दछ । यो पीडालाई मीराले झेलिन्, यो पीडा ती साधकहरूले झेलेका छन् जसले प्रेम गरेका थिए । कबीरले पत्थरलाई झेले । ईसा मसीहले पत्थरबाट आफ्नो शरीरलाई रगताम्य गरे किनकि उनीहरूले प्रेमको भाषा सिकेका थिए । क्रमश:

आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं। कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ। यसको मौलिकतालाई कायम राख्दै साधककोव्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ। यसका बाँकी अंशहरूलाई धारवाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ।

# स्वर्गलोकको यात्रा...

...तत्पश्चात् हामीबीच विभिन्न विषयसम्बन्धी कुराकानी भए जसको बारेमा सुन्दा म निकै अचम्मित भएको थिएँ। उनको (अप्सराको) अनुसार उनीहरूको मुख्य लक्ष्यमध्ये एक सिद्धाश्रम जान र आउन पाउनु एक हो जसको लागि उनीहरू निकै लालायित हुने गर्दछन्, जसको प्रत्यक्ष प्रभाव उनीहरूको जीवनमा पर्दोरहेछ जस्तै सौन्दर्य, तप, शक्ति, विभिन्न ऋषिमुनिहरूको कृपा र सान्निध्यता। कुराकानीकै क्रममा उनले आफूलाई पनि यो अभूतपूर्व अवसर मिलेको कुरा अवगत गराइन्। त्यसपछि उनीलाई खै के हो ? कहाँबाट सूक्ष्म बोलावट भएछ कि के हो, उनले मलाई त्यही रमणीय वातावरणमा केही बेर टहल्ने अनुमति दिएर अलप भइन्।

म त्यहाँको वातावरणमा कौतुहलपूर्ण तवरले डुल्न (घुमफिर गर्न) थालेँ। मलाई साँच्चै त्यहाँको वातावरण निकै ओजपूर्ण र शक्ति एवं सौन्दर्यले परिपूर्ण लाग्यो। बीचमा निकै ठूलो पोखरी थियो जहाँ विभिन्न रङका कमलहरू फुलिरहेका थिए (नजिकबाट हेर्न पाइएन, अलि टाढाबाट हेर्दा कमलजस्तो देखियो, त्यसैले मैले कमलको रूपमा चित्रण गरेँ। यदि अर्कै फूल रहेछ भने क्षमा चाहन्छु।) जो आफैँमा परिपूर्ण थिए। जो एक वनस्पति नभई कुनै तपस्वी व्यक्तित्व थिए र फूलरूपी देहमा तपस्यारत थिए भन्ने भान भयो मलाई। जहाँ विभिन्न जोडी राजहंसहरू एक-आपसमा प्रेममा चुर्लम्म डुबी तैरिरहेका छन्। लाग्दथ्यो, उनीहरूलाई यसबाहेक अरू दुनियाँको न त कुनै मतलब नै

**भगवान् इन्द्रले मलाई यति आदर सम्मानपूर्वक आफ्नो कक्षमा भित्र्याउनु भयो कि म आफू ज्यादै लज्जित भएँ । भगवान् इन्द्र साँच्चै नै धेरै माथिल्लो हुनुहुँदोरहेछ । समस्त प्रकारका देव संस्कृतिका खजानाहरू उहाँकै अधीनमा हुँदा रहेछन् ।**

छ, न त चाहना नै । उनीहरूले यही स्वर्गीय आनन्द प्राप्त गर्नको लागि मात्रै कैयौँ तपस्या, दान, धर्म र पुण्यकर्म गरेका थिए, सायद ।

त्यहाँको हावामा कुनै अष्ट सुगन्धको बास्ना थियो । लाग्दथ्यो, सायद पवनदेव नै मेरो समीप बसी मुस्कानरूपी वर्षा छोडी आशीर्वाद दिइरहनु भएको छ । हावाको स्पर्श त पृथ्वीलोकमा पनि अनुभव हुन्छ । तर मलाई त्यस्तो कहिल्यै पनि सोच-विचार आएको थिएन । सायद यो मेरो कमजोरी थियो होला । मैले नतमस्तक भएर अभिवादन गरेँ मनमनै किनकि मैलै स्थूल होइन, सूक्ष्म अनुभूति मात्रै गरेको थिए । अलि पर एक अति सुरम्य पवित्र स्थल थियो । नजिकै एउटा विशाल र अति सुन्दर वृक्ष पनि थियो । दायाँबायाँ भनौँ या वरिपरि, अति सुन्दर फूलहरूको बगैँचा थियो ।

सायद त्यो वृक्ष स्वर्गको कल्पवृक्ष होला । नजिक जाने अवसर त मिलेन किनकि त्यहाँ म एक्लै थिएँ । नयाँ ठाउँ, नयाँ परिवेश, जान नहुने हो कि जस्तो मनमा दुविधा उत्पन्न भएकोले टाढैबाट अभिवादन गरेँ । जे होस् टाढैबाट भए पनि त्यस्तो पवित्र वृक्षको दर्शन गर्ने अवसर सायद दैवी कृपा र तपस्याबाट मात्र सम्भव हुन्छ । त्यस वृक्षबाट कुनै विशेष किसिमको सुगन्ध र प्रकाश आइरहेको थियो । ममा एक किसिमको डर र भय उत्पन्न भयो किनकि यहाँ डुल्दा मबाट अन्जानवश केही गल्ती पो हुने हो कि भनेर । म कौतुहलपूर्ण दृष्टिले चारैतिर हेरिरहेको थिएँ ।

अलि टाढा-टाढा गएर हेर्ने र डुल्ने साहस ममा आएन, बस सोचिरहेको थिएँ । यति सुन्दर, शान्त र आनन्द हुँदोरहेछ र पो सारा मान्छेहरू स्वर्गको चाहना गर्दा रहेछन् । जहाँ पुगेपछि कुनै इच्छा र चाहना नै बाँकी रहँदो रहेनछ । तर तपस्वीहरू के चाहन्छन्, त्यो उनीहरूलाई नै सोधेर बुझ्नुपर्दछ । न त भोक, न त प्यास, न त निद्रा, यही होला स्वर्गीय आनन्द भनेको । जसले जे चाह्यो, त्यही तयार हुने तर के सबैले (स्वर्गको ?) जे चाह्यो त्यही हुन्छ ? होइन होला, यो पनि आफ्नो शक्ति (तपस्या) को भरमा होला ।

यही कल्पना गर्दै थिएँ म, उनी (अप्सरा) कतिखेर मेरो सामु प्रकट भइन्, मैले पत्तो नै पाइन । उनले "के सोच्दै हुनुहुन्छ ?" भनेपछि झसङ्ग भएर भनेँ– "केही होइन, स्वर्गको स्वर्गीय आनन्दको अनुभूति गर्दै थिएँ ।" उनले भनिन्– "स्वर्गका विभिन्न देवताहरूको उपस्थितिमा अप्सराहरूद्वारा नृत्य प्रस्तुत हुँदैछ । देवराज इन्द्रद्वारा मैले अनुमति लिएकी छु । तपाईंले चाहेको खण्डमा तपाईं पनि कुनै एक स्थानमा बसेर हेर्न सक्नुहुन्छ तर कसैलाई बाधा अड्चन नपर्ने गरी ।" मैले हुन्छ भन्ने इशारा गरी टाउको हल्लाएँ र पछि-पछि लागेँ । उनले मलाई सबैभन्दा पछाडि एक छेउमा लगेर बसालिदिइन् । त्यसपछि उनी नृत्यको लागि प्रस्तुत भइन् ।

उनले स्टेजजस्तो ठाउँमा प्रवेश गर्नासाथ विभिन्न अरू अप्सराहरू पनि देखा परे । सङ्गीतको धुन यति कर्णप्रिय थियो कि हरक्षण पलपल आज पनि त्यो धुन सुन्नको लागि मेरा कान आतुर रहन्छन् । नृत्यको वर्णन गर्न त मसँग शब्द नै छैन । म गएर त्यहाँ उपस्थित सबै देवताहरूलाई नतमस्तकरूपमा अभिवादन गरेँ र बसेँ । सबै देवताहरू जाज्वल्यमान स्वरूपमा थिए । सबैजनाको अनुहार तेज र शक्तिले धपक्क बलेको थियो । वरिपरि दैवी प्रज्ञाहरू परिक्रमा गरिरहेका थिए । स्वर्गका राजा इन्द्रको त कुरै छाडौँ । साथमा उनकी अर्धाङ्गिनी शक्तिस्वरूप विराजमान थिइन् जसको सौन्दर्यको वर्णन सायद पृथ्वीलोकमा कसैले गर्न सकून् । सायद मलाई यहाँसम्म पुऱ्याउने अप्सरा र उनको तुलना गर्न थालेछु मैले । सायद फरक छुट्याउन मुस्किल पऱ्यो । को बढी भन्ने ? सबैजना भव्य एवं आकर्षक पोशाक, गरगहना र आसनमा विराजमान थिए ।

म त त्यहाँको नृत्य हेर्नभन्दा पनि त्यहाँका देवताहरूको बारेमा सोच्न र उनीहरूलाई हेर्नमा व्यस्त थिएँ । मधुर धुन, सङ्गीत र लयबद्ध स्वरमा गुञ्जिएको गीतका शब्दहरू पनि त्यस्तै मिठासपूर्ण र ओजपूर्ण थिए । स्वर केटीको थियो । सायद नृत्यमा व्यस्त अप्सराहरूकै मुक्तकण्ठबाट गुञ्जित शब्द थियो त्यो । उनीहरूको त्यो सुरिलो स्वरमा व्याप्त मिठासले परिपूर्ण गीत, त्यो नृत्यमय भावभङ्गी, शरीरको चालढाल, पाउको त्यो थरकन, हातका मसिना औँलाहरूको अभ्यास म कसरी वर्णन गरूँ । जसको वर्णन गर्न न त मसँग शब्द छ, न त शक्ति ।

यत्तिकैमा मेरो उपस्थितिको आभास

भएजस्तो लाग्यो । राजा इन्द्रले मतर्फ दृष्टि लगाएजस्तो लाग्यो । मलाई डर र सङ्कोच लाग्यो । तत्पश्चात् त्यहाँको नृत्य खत्तम हुनेवाला नै थियो र ती अप्सरा सीधै राजा इन्द्र भएतिर गइन्, खै कुन्नी के कुरा गरिन् । अरू नृत्यमा नै व्यस्त थिए । तत्पश्चात् उनी सीधै म भएतिर आइन् (प्रकट भइन्) र बाहिर जाने आग्रह गरिन् । मलाई केही गल्ती भयो कि भन्ने महसुस भयो । त्यसैले बाहिर आएर सोधेँ । उनले भनिन्– "होइन, केही गल्ती भएको छैन । केवल सूक्ष्मरूपको उपस्थिति केही अप्ठ्यारो महसुस भयो रे त्यहाँ ।" मात्र मलाई शरीररूपमा फर्कन आग्रह गरिन्, राजा इन्द्रसँग भेटेर कुराकानी गर्नुपर्ने विषयसमेत अवगत गराइन् र त्यहाँबाट अलप भइन् ।

म पनि गह्रौं भावले शरीररूपमा फर्कने तरखरतिर लागेँ । मलाई लाग्यो सायद मेरो कारणले गर्दा उनलाई कतै अप्ठ्यारो त पर्ने होइन ? किनकि मैले सुनेअनुसार राजा इन्द्र तपस्वीहरूदेखि ईर्ष्या गर्छन् रे । सायद यसै भएको त होइन ? मेरो कारण उनले सजाय भोग्नुपर्ने त होइन ? हे भगवान् ! यस्तो केही नहोस् । हे गुरुदेव ! मेरो कारणबाट कसैलाई पनि दुःख नहोस्, कष्ट नहोस् । मेरो तपस्याको कारण कसैलाई पनि अप्ठ्यारो हुन्छ भने हे गुरुदेव ! मलाई हजूरको चरण भए पुग्छ, अरू केही चाहिँदैन । यस्तै प्रार्थनामा म लिप्त भएँ, त्यत्तिकैमा मलाई बोलावट आयो । अब म देवराज इन्द्रसमक्ष जानुपर्ने भयो । मलाई कता-कता डर लागेजस्तो भयो, उकुसमुकुस भएर आयो । मेरो कारणबाट अरू कसैलाई दुःख, अड्चन पुग्नु भनेको कालान्तरमा त्यसको दोष पनि मैले नै भोग्नु बराबर हो । चाहे जे होस्, आखिर जानु नै पर्दछ । जे कुराको लागि डर माने पनि नमाने पनि आखिर भोग्नै पर्ने भोग रहेछ भने हामीले टार्न खोजेर टर्दो रहेनछ । जुन कुरा भोग्नु पर्दैन, त्यो खोजेर पनि पाइने रहेनछ । सम्पूर्ण कुरा गुरुमा नै अर्पण गरेर भगवान् देवराज इन्द्रसमक्ष म अति सावधानीपूर्वक र नियम, अनुशासनमा रही उपस्थित भएँ । देव संस्कृतिअनुरूपको प्रणाम गरेँ । तर अचम्मको घटना यो भयो कि मैले जुन रूपबाट देवराज इन्द्रलाई सोचेँ, त्यो मेरो भावना दोष रहेछ । बेकारमा मैले अन्यरूपबाट ठानेछु । नानाप्रकारका दर्जा भिराएँ इन्द्रलाई । भावलाई मैले यति विकृत पारेको रहेछु कि सूक्ष्माकाशमा त्यसको गन्ध तुरुन्त आभास भइहाल्यो । भगवान् इन्द्रले मलाई यति आदर सम्मानपूर्वक आफ्नो कक्षमा भित्र्याउनु भयो कि म आफू ज्यादै लज्जित भएँ । भगवान् इन्द्र साँच्चै नै धेरै माथिल्लो हुनुहुँदोरहेछ । समस्त प्रकारका देव संस्कृतिका खजानाहरू उहाँकै अधीनमा हुँदा रहेछन् । उहाँले बताउनुभएका कतिपय कुराहरू देवदुर्लभ नै छन् । उहाँले सूक्ष्मसत्ताको माध्यमबाट कुनै समयमा देवलोकमा रही आफ्ना शक्ति र सिद्धि भोग गरेको, शक्ति र सिद्धि खर्च गरेको थलो (स्थान) पनि देखाउनुभयो । मलाई आफ्नो पूर्वकाल तुरुन्त याद आयो । त्यसबेलामा भएको एक-एक घटना याद आयो । किन भावनामा विकार जन्मिँदो रहेछ, त्यो पनि थाहा पाएँ । यी सम्पूर्ण कुरालाई छाडेर सर्वप्रथम मैले भगवान् देवराज इन्द्रसँग क्षमा माग्नुपर्ने महसुस गरेँ र उहाँसमक्ष आफूबाट भएका भावनात्मक गल्तीको बारेमा वृत्तान्तरूपमा बताएँ र उचित सजाय भोग्नको लागि अनुरोध गरेँ ।

जसले गल्ती गर्दछ उसले सजाय भोग्नुपर्दछ । यो प्रकृतिको नियम नै हो । कसैले बदर गर्दैमा बदर हुने होइन । तर त्यो गल्ती नभई पूर्वार्द्धको सट्टा गर्नुपर्ने भोग हो भने त्यो चाहिँ भोग्नुपर्दो रहेनछ । कहिलेकाहीँ हामीबाट केही कमजोरी, त्रुटी हुन गयो भने त्यही मौका पारेर अन्य सूक्ष्म शक्ति प्रवेश गर्दो रहेछ र उक्त सूक्ष्म शक्तिले आफूमा भएका भावना सम्प्रेषण गर्दो रहेछ । त्यही भावना हामीले आफ्नो ठान्दा रहेछौँ । तर यथार्थमा त्यो भावना अर्काको पनि हुनसक्ने रहेछ । कैयौँ सूक्ष्म शक्तिले यस्तै प्रकारबाट अर्काको माध्यमबाट आफ्नो भोग तृप्त गर्ने रहेछन् । राम्रो भाव, नराम्रो भाव सबैमा भोगकै अर्थ खुलेको हुने रहेछ । प्रत्येक बोलीभित्र हजारौँ प्रकारका सूक्ष्म शक्ति लुकेर रहेको हुनसक्ने रहेछ । यस रूपबाट म डुब्दै विश्लेषण गर्दै जाँदा यस्तो पनि पाएँ कि बाहिरको रूप एउटा तर त्यस रूपभित्र हेर्दा अर्को रूप विद्यमान भएको पाएँ । यदि कुनै साधक या साधिका आफ्नो गुरुसामु सही शिष्य साबित भएको छ भने ऊ बाहिरबाट हेर्दा शिष्य हुँदो रहेछ । उसभित्र त केवल गुरु मात्र हुँदा रहेछन् । अनि यसैगरी गुरुलाई नियालेर हेर्दा यदि साँच्चै नै गुरु हो भने बाहिरबाट हेर्दा गुरुरूप देखिँदोरहेछ र भित्र नियालेर हेर्दा केवल अनन्तकोटि शिष्यहरूको रूप र रङ्गले भरिएको हुँदोरहेछ । यही प्रकृतिको विधान रहेछ । त्यस प्रकारको रहस्यले गर्दा आजसम्म गुरु-शिष्य परम्पराले जीवन्तता पाएको रहेछ । यी कुरा अब यहीं नै स्थगन गरौँ ।

जब मैले देवराज इन्द्र भगवान्सँग सजाय भोग्नको लागि अनुरोध गरेँ, उहाँले मलाई भन्नुभयो कि "जे भोग्नुपर्ने हो, तपाईंले भावनाको माध्यमबाट आफूले आफैलाई भोगाउनुभयो । यो पनि एक प्रकारको सजाय हो । आफूले आफैलाई क्षमा मागी दण्डित गर्ने प्रक्रिया पनि वास्तवमा राम्रो हो । यसले तपाईंलाई उच्चतम अवस्थामा पुऱ्याउनको लागि मद्दत गर्दछ । अब यसभन्दा अगाडि बढ्दै जानुहोला ।" त्यसपछि उहाँ (देवराज इन्द्र) अन्तर्ध्यान हुनुभयो । मलाई कुरेर बसिरहेको आभास भयो । म

आफूले आफैलाई सम्हालेर मेरा पूज्यतम गुरुहरूलाई स्मरण गरी 'अमिरण' प्रक्रियामा गएँ। अब म पृथ्वीलोक (मनुष्यलोक) मा नै शरीररूपमा फर्कनुपर्ने भयो । तर मेरो साथमा तिनी (अप्सरा, जसले मलाई मद्दत गरिरहेकी छिन्) पनि जाने प्रपञ्च रहेछ। जसरी मनुष्य जातिलाई अन्य लोकको भ्रमण गर्ने तृष्णा रहन्छ, त्यसैगरी अप्सराहरूलाई पनि मनुष्यलोकमा जाने, भ्रमण गर्ने, मनुष्य जातिसँग सम्पर्क मिलाउने (नाता गाँस्ने) आदि प्रकारका आन्तरिक इच्छा हुँदा रहेछन्। यसरी मनुष्यको सम्पर्कमा आउँदा उनीहरूलाई मनुष्य जीवनमा आएर भोग्नुपर्ने भोग छ भने मेटिँदो रहेछ। तिनीहरू (अप्सराहरू) को लोकमा अचम्म लाग्दो कुरा चाहिँ के हुँदोरहेछ भने समग्ररूपमा अप्सरा लोक भनेर चिनिँदो रहेछ तर एउटै लोकभित्र कैयौँ सहायक लोक हुँदा रहेछन्। शक्ति, सौन्दर्य, सामर्थ्यको आधारमा सहायक लोक निर्माण भएका हुने रहेछन्। कुनै सहायक लोक (सह-अप्सरालोक) मा एउटा मात्र अप्सराको आधिपत्य हुने रहेछ। हुन त त्यहाँ कैयौँ अप्सरा हुने रहेछन् । तर मुख्य अप्सराको नाममा उक्त सह-अप्सरालोक चल्नेरहेछ । कल्पनाभन्दा ज्यादै परको विषयबारे चित्रण गर्दा कतिपय कुरा अपत्यारिला लाग्ने रहेछन्। तर पनि वास्तविक सत्य विश्वास र अविश्वासभन्दा पर नै हुने रहेछ। ती अप्सराले एउटा यानजस्तो उपकरण सृष्टि गरिन् वा त्यो उपकरण आफै आयो । त्यसभित्र म र उनी बस्यौँ। उक्त यान स्वत: नै चल्न थाल्यो । अत्यन्त नौलो ठाउँमा हामी दुईजना मात्र यानभित्र थियौँ। मलाई कस्तो-कस्तो अप्ठ्यारो महसुस भइरहेको थियो। उनको (अप्सराको) शरीरको बनावट र वस्त्राभूषण एवं पहिरन पनि अलि त्यस्तै खालको थियो । मेरो मन पूर्णरूपले उनीतर्फ नै आकर्षित भइसकेको थियो । तर बाहिरीरूपमा भने म बडो भलादमीजस्तो, आफ्ना भित्री भावनालाई दबाएर बडो सत्यवादी भएको जस्तो गरी बसिरहेको थिए । एक किसिमले भन्नुपर्दा म ढोङ्गी भइरहेको थिए। बाहिर बोक्रा थियो । तर मभित्र भने खोक्रा पक्ष हावी भइरहेका थिए। मैले आफूलाई गुरु परीक्षामा परिरहेको अनुभव गरेँ। मभित्रबाट उर्लेर आएको भावलाई लागू गराउन नसक्नु स्वयं भोग्नुपर्ने भोग हो भने त्यसलाई स्टक राख्नु अर्को पटक साँवा र व्याजसहित भोग्नुपर्ने बाध्यता सृजना हुनु हो । यदि उक्त भावना पछि जन्मेको हो भने यो अनावश्यक आसक्तिरूप हो । यस्ता प्रकारका अनावश्यक आसक्तिरूपले सूक्ष्म देहमा घर गर्न थाल्यो भने कहिले माथि पुग्ने ! म बडो धर्मसङ्कटमा परेँ । यस्तै-यस्तै विचाररूपबाट म मन्थनरूपमा डुबुल्की मारिरहेको थिएँ। मलाई उनीपट्टि फर्केर एकपटक हेर्ने इच्छा जागेर आयो । जब मैले उनलाई हेरेँ,... क्रमश:

# परा-पूजा

**अखण्डे सच्चिदानन्दे निर्विकल्पैकरूपिणी ।**
**स्थितेऽद्वितीय भावेऽस्मिन्कथं पूजा विधीयते ।। १ ।।**
**पूर्णस्यसवाहनं कुत्र सर्वाधारस्य चासनम् ।**
**स्वच्छस्य पाद्य मार्घ्य च शुद्धस्याचमनं कुतः ।। २ ।।**
**निर्मलस्य कुतः स्नानं वस्त्रं विश्वोदरस्य ।**
**अगोत्रस्य त्ववर्णस्य कुतस्तस्योपवीतकम् ।। ३ ।।**
**निर्लेपस्य कुतो गन्धः पुष्पं निर्वासनास्य च ।**
**निर्विशेषस्य का भूषा कोऽलंकारो निराकृतः ।। ४ ।।**
**निरंजनस्य किं धूपैर्दीपै र्वा सर्वसाक्षिण ।**
**निजानन्दैकतृप्तस्य नैवेद्यं किं भवेदिह ।। ५ ।।**
**विश्वानन्दयितुम्तस्य किं ताम्बूलं प्रकल्पते ।**
**स्वयं प्रकाश तिद्रूपो योऽसावर्कादिभासकः ।। ६ ।।**
**प्रदक्षिणहचनन्तस्य हचद्वयस्य कुतो नतिः ।**
**वेद वाक्यैज्ञेयस्य कुतः स्त्रोत्रं विधीयते ।। ७ ।।**
**स्वयं प्रकाश मानस्य कुतो नीराजनं विभो ।**
**अन्तर्बहिश्च पूर्णस्य कथमुद्वासनं भवेत् ।। ८ ।।**
**एक मेव परा पूजा सर्वावस्थासु सर्वदा ।**
**एक बुद्धया तु देवेशि विधेया ब्रह्म वादिभिः ।। ९ ।।**

अर्थात् 'अखण्ड सच्चिदानन्द, निर्विकल्प रूप, अद्वितीय भावमा विराजमान यस्ता हजूरलाई म कुन प्रकारले पूजा गर्न सक्छु ? जो पूर्ण हुनुहुन्छ उहाँको कहाँ आह्वान गर्न सकिन्छ ? जो स्वयं सबैको आधार हुनुहुन्छ उहाँलाई कुन वस्तुको आसन अर्पण गरुँ ? जो स्वच्छ हुनुहुन्छ उहाँलाई पाद्य र अर्घ्य कसरी दिऊँ ? जो नित्य शुद्ध हुनुहुन्छ उहाँलाई आचमनको के अपेक्षा ? निर्मललाई स्नानको के आवश्यकता ? सम्पूर्ण विश्व जसको उदरमा विचरण गर्दछ उहाँलाई कस्तो अनि कति वस्त्र ? जो वर्ण र गोत्रले रहित हुनुहुन्छ उहाँलाई यज्ञोपवीत किन ? निर्लेपलाई गन्ध किन ? निर्वासनिकलाई शोभाको के अपेक्षा र निराकारलाई आभूषण कस्तो ? निरंजनलाई धूपको के आवश्यकता ? सर्वसाक्षी परमात्मालाई दीप साक्षी किन ? जो स्वयं प्रकाश, चित्स्वरूप सूर्य चन्द्रादिको पनि अवभासक र विश्व ब्रह्माण्डलाई आनन्दित गर्ने हुनुहुन्छ उहाँलाई ताम्बूल के समर्पण गर्नु ? अनन्तलाई परिक्रमा कसरी गर्ने ? अद्वैत (जो आफूबाट भिन्न हुनुहुन्न) लाई नमस्कार कसरी गरुँ ? जसलाई वेद वाक्यहरूबाट पनि जान्न सकिँदैन उसको स्तवन कसरी गरुँ ? जो स्वयं प्रकाशस्वरूपमा विराजित हुनुहुन्छ उहाँको आरती कसरी गरुँ ? जो भित्र-बाहिर सबैतिरबाट परिपूर्ण हुनुहुन्छ उहाँलाई विसर्जन कसरी ? ब्रह्मवेत्ताहरूले सबै अवस्थामा यस प्रकार एक भक्तिबाट ईश्वरको परा-पूजा गर्नुपर्दछ ।'

**-भगवत्पाद आद्य शंकराचार्य**

# आफ्नो हात आफैं हेरौं

३. सूर्य : साहिँली औँलाको मूलमा तथा हृदयरेखा माथिको भागलाई सूर्य पर्वत भनिन्छ । यस्तो पर्वत व्यक्तिको सफलताको सूचक मानिन्छ । यदि हातमा सूर्य पर्वतको अभाव देखिन्छ भने व्यक्तिले अत्यन्तै साधारण जीवन व्यतीत गर्दछ । त्यसैले जसको हातमा सूर्य पर्वत हुँदैन त्यसले एक प्रकारले महत्ताहीन जीवन व्यतीत गर्दछ ।

यस पर्वतको विकास मानवका लागि अत्यन्तै आवश्यक छ र यस पर्वतको विकासबाट मानव प्रतिभावान् र यशस्वी बन्दछ । यदि यो पर्वत पूर्ण उन्नत, विकसित तथा गुलाबी छ भने व्यक्ति आफ्नो जीवनमा अत्यन्तै उच्च पदमा पुग्दछ । यस्तो व्यक्ति स्वभावबाटै हंसमुख तथा मित्रहरूसँग भिजेर काम गर्ने हुन्छ । यस्तो व्यक्तिको काम-कुरा समाचार बन्दछ र जनसाधारणहरूका बीचमा यस्तो व्यक्ति अत्यन्तै लोकप्रिय हुन्छ । यस्तो व्यक्ति सफल कलाकार, श्रेष्ठ संगीतज्ञ तथा यशस्वी चित्रकार हुन्छ । यस्तो व्यक्तिमा जन्मजात प्रतिभा हुन्छ । एकआपसको व्यवहारमा यस्तो व्यक्ति इमान्दार हुन्छ तथा वैभवपूर्ण जीवन व्यतीत गर्न यस्तो व्यक्ति इच्छुक हुन्छ । वास्तवमा यस्तो व्यक्तिले व्यापारबाट विशेष लाभ उठाउँछ तथा यस्तो व्यक्तिको जीवनमा आयको स्रोत एकभन्दा बढी हुन्छ ।

यस्तो व्यक्ति पूर्णरूपमा भौतिक हुन्छ तथा अगाडि रहेका व्यक्तिहरूको मनको वास्तविकता बुझ्न सक्षम हुन्छ । अनपढ तथा सामान्य घरका व्यक्तिहरूको हातमा यदि सूर्य पर्वत विकसित छ भने तिनीहरू श्रेष्ठ, धनी तथा सम्पन्न हुन्छन् । आकस्मिकरूपमा धनको प्राप्ति यिनीहरूको जीवनमा कैयौँपटक हुन्छ तथा यिनीहरूको रहन-सहन अत्यन्तै राजसी तथा वैभवपूर्ण हुन्छ ।

हृदयदेखि नै यिनीहरू स्वच्छ हुन्छन् र आफ्ना गल्तीलाई स्वीकार गर्नमा पनि हिचकिचाउँदैन । तीक्ष्ण मस्तिष्कका धनी यिनीहरू आफ्नो विरोधलाई सहन सक्दैनन् तथा अगाडि नै स्पष्ट कुरा भन्नेमा विश्वास गर्दछन् । यस्ता व्यक्तिहरू नै जीवनमा महत्त्वपूर्ण पदमा पुग्न सक्दछन् तथा केही नयाँ कार्य गरेर देखाउन सक्दछन् ।

यदि हातमा सूर्य पर्वत छैन भने यस्तो व्यक्ति मन्दबुद्धि तथा मूर्ख हुन्छ । यदि यो पर्वत कम विकसित अवस्थामा रहेको छ भने त्यस व्यक्तिमा सौन्दर्यप्रति रुचि त हुन्छ तर त्यसले त्यसमा पूर्ण सफलता प्राप्त गर्न सक्दैन । अत्यन्त श्रेष्ठ तथा सुविकसित सूर्य पर्वत आत्मविश्वास, सज्जनता, दया, उदारता तथा धन-वैभवको सूचक हुन्छ । यस्तो व्यक्तिले सभा, समारोह आदिमा अरूलाई प्रभावित गर्न विशेष क्षमता राख्दछ । यस्तो व्यक्तिले पाउने आदर अत्यन्तै उच्च हुन्छ ।

यदि यो पर्वत आवश्यकताभन्दा धेरै विकसित छ भने त्यो व्यक्ति अत्यधिक घमण्ड गर्ने तथा झूटो प्रशंसा गर्ने प्रवृत्तिको हुन्छ । यस्तो व्यक्तिका मित्रहरू सामान्य स्तरका हुन्छन् । यस्तो व्यक्ति अनावश्यकरूपमा खर्च गर्ने तथा क्षण-क्षणमा नै झगडा गर्ने खालको हुन्छ । यस्तो व्यक्तिले जीवनमा पूर्ण सफलता भने प्राप्त गर्न सक्दैन ।

यदि सूर्य पर्वत शनि पर्वततिर झुकेको छ भने यस्तो व्यक्ति एकान्तप्रिय तथा निराशावादी भावनाहरूबाट ग्रस्त हुन्छ । यस्तो व्यक्तिको जीवनमा धनको कमी सधैँ रहन्छ । कुनै पनि कार्यलाई यस्तो व्यक्तिले पूर्ण जोशका साथ प्रारम्भ गरे पनि त्यत्तिकै जोशका साथ कार्यलाई पूरा भने गर्न सक्दैनन् । कार्यलाई बीचमा नै अधूरो छोडेर कुनै नयाँ कार्यतिर लाग्दछ । वस्तुतः शनितर्फ झुकेको पर्वत भाग्यहीनताको सूचक हो ।

यदि यो पर्वत बुधतर्फ झुकेको छ भने व्यक्ति एउटा सफल व्यापारी तथा श्रेष्ठ धनवान् हुन्छ । यस्तो व्यक्ति समाजमा सम्माननीय स्थान प्राप्त गर्न सफल हुन्छ ।

यदि सूर्यको औँला बेडौल हुन्छ भने सूर्यका गुणहरूमा न्यूनता आउँछ । यस्तो व्यक्तिमा बदलाको भावना बढ्न जान्छ तथा अरूसँग व्यवहार गर्दा सावधान हुँदैन । सूर्य पर्वतमा आवश्यकताभन्दा धेरै रेखा छन् भने त्यो व्यक्ति बिरामी भइरहन्छ । यदि सूर्य औँलाको टुप्पो कोणदार छ र पर्वत फुकेको छ भने त त्यो व्यक्तिले कलाको क्षेत्रमा विशेष रुचि लिन्छ । वर्गाकार टुप्पो व्यावहारिक कुशलता तथा तीखो टुप्पो आदर्शवादिताको सूचक मानिन्छ ।

क्रमशः

जय गुरुदेव !

# अभ्यङ्ग

आज पनि हाम्रो गाउँघरमा बच्चाहरूलाई घाममा राखेर विभिन्न प्रकारका तेलहरूले मालिश गर्ने, कृषकहरूले दिनभरि काम गरेपछि राति शरीरमा तेलले मालिश गरेर सुत्ने, साथै अन्य व्यक्तिहरूले पनि विभिन्न चाडपर्वहरूमा शरीरमा तेल लगाउने प्रचलन रहिआएको छ । प्राचीन समयदेखि नै प्रचलनमा आएको शरीरमा तेल लगाउने प्रक्रिया स्वास्थ्यवर्द्धनमा प्रभावकारी भेटिएपछि आज आएर धेरै मानिसहरूले विभिन्न रूपमा अपनाउन थालेका छन् ।

आयुर्वेद चिकित्सामा उपचारका अनेक किसिमका प्रविधिहरू छन् । तीमध्ये कुनै पनि चिल्लो पदार्थ जस्तैः घिउ, तेल वा औषधिसिद्ध तेल आदिले शरीरमा मालिश गर्ने प्रक्रिया पनि एउटा हो । यसलाई अभ्यङ्ग (oil massage) भनिन्छ । अभ्यङ्ग दैनिकरूपमा पनि गरिन्छ । हाल आएर यसलाई मसाज, शिरोधारा आदिको रूपमा पनि अपनाइएको पाइन्छ ।

स्वस्थ रहन दैनिकरूपमा प्रयोग गरिने एक प्रकारको अभ्यङ्ग हुन्छ भने रोगअनुसार प्रयोग गरिने अर्को प्रकारको हुन्छ । स्वस्थ रहनका लागि दैनिकरूपमा गरिने अभ्यङ्गमा प्रायः तिलको तेल अथवा समय र स्थानअनुसार उपलब्ध हुने तेलहरू जस्तैः नरिवलको तेल, तोरीको तेल आदि प्रयोग गर्ने प्रावधान छ । हाम्रो नेपालमा तोरीको तेल बढी उत्पादन हुने हुनाले तोरीको तेल बढी मात्रामा प्रयोग गरिएको पाइन्छ ।

तेल प्रायोग गर्दा सादारूपमा वा औषधिसिद्ध दुवै रूपमा प्रयोग गर्न सकिन्छ । हाम्रो दैनिक जीवनमा मेथी अथवा ज्वानो फुराएको तेलको प्रयोग बढी मात्रा गरिएको देखिन्छ । विभिन्न सुगन्धित औषधिहरू तथा अन्य औषधिहरूले सिद्ध गरिएका तेलहरू पनि प्रयोग गर्न सकिन्छ । अहिलेको अवस्थामा ल्वाङ्गको तेल तथा बदामको तेलको प्रयोग पनि चल्तीमा आएको छ ।

अभ्यङ्गका दुई मुख्य उद्देश्य छन्– एउटा यसले छालामा नरमपना ल्याउँछ, छाला फुट्न पाउँदैन, बाहिरी छालाको सुरक्षा हुन्छ भने अर्को यसले शरीरका आन्तरिक अङ्गहरूको सञ्चालनमा सहयोग पुऱ्याउँछ, जोर्नीहरू दुख्ने समस्याहरू कम गराउँछ । आयुर्वेदमा विशेष गरेर वायुसम्बन्धी रोगहरूको शमनका लागि अभ्यङ्ग गर्नुपर्ने निर्देश छ । अभ्यङ्ग गर्दा शिरदेखि लिएर पैतालासम्म सबै अङ्गहरूको गर्ने विधान छ । त्यसमा पनि शिरमा, पैतालामा र नाभीमा विशेषरूपमा अभ्यङ्ग गर्नुपर्ने उल्लेख छ ।

श्वास रोगमा कफ ननिस्कँदा सैन्धवलवणादि तेलले छातीमा मालिश गर्दा कफ राम्रोसँग निस्कन्छ ।

सन्धीशूल अर्थात् जोर्नीहरू दुख्ने रोगमा, कुपोषणले गर्दा शरीरका सर्वाङ्ग सुकेको अवस्थामा, बालकहरूको वृद्धि सहीरूपमा नभएमा तिलको तेल, नरिवलको तेल, जैतुनको तेल आदिले अभ्यङ्ग गर्दा धातुहरूको पोषण भएर रोग नाश हुनुको साथै शरीरको वृद्धिमा मद्दत पुग्ने हुन्छ । तेलमा तातोपना बढाउने गुण हुने भएकोले शरीरलाई चिसो लाग्नबाट पनि बचाउँछ ।

थकाइ लाग्दा शरीरको पोषणमा ह्रास आएको हुन्छ । तेलले अभ्यङ्ग गर्नाले पोषण प्राप्त हुन्छ जसले गर्दा थकाइ नाश हुन्छ ।

मानिसको शरीरमा वातविकारका कारण निद्रा नलाग्ने हुन्छ । तेलले वात शमन गर्ने हुँदा अभ्यङ्गपश्चात् मानिस सजिलै निदाउने गरेको पाइन्छ ।

स्रोतहरू खुलेको अवस्थामा अभ्यङ्गले राम्रो काम गर्दछ, भित्रसम्म गएर कार्य गर्दछ भने स्रोतहरू बन्द भएको अवस्थामा अभ्यङ्ग निषेध गरिएको छ ।

**अभ्यङ्गमाचरेन्नित्यं, स जराश्रमवातहा ।**
**दृष्टिप्रसादपुष्टचायुः स्वप्नसुत्वक्त्वदार्ढ्यकृत् ॥**
**शिरःश्रवणपादेषु तं विशेषेण शीलयेत् ॥**

(-अ.हृ.सू.२/८)

आचार्य वाग्भटका अनुसार तेल अभ्यङ्गले रोग, श्रम र वायुविकारलाई नाश गर्दछ साथै आँखाको दृष्टिलाई प्रवर्धन गर्ने, आयु पुष्ट गर्ने, निद्रा लगाउने, छालालाई सुन्दर बनाउने तथा शरीरलाई दृढता प्रदान गर्ने आदि कार्य गर्दछ । शरीर दृढ भएपछि शरीरमा क्लेश, श्रम तथा व्यायामलाई सहन सक्ने क्षमताको वृद्धि हुन्छ । त्यसैले नित्य विधिपूर्वक तेल अभ्यङ्ग पनि महत्त्वपूर्ण स्वस्थवृत्त हो, दिनचर्याको अङ्ग हो ।

प्रतिदिन कानमा तेल हाल्नाले वातज कर्ण रोगहरू नाश हुन्छन्, औषधिजन्य तेलले शिरमा मालिश गर्नाले टाउको दुख्ने, अकालमा केश पतन हुने, केश पाक्ने आदि हुन दिँदैन । साथै कपालको जरा बलियो बन्दछ ।

खुट्टामा, पैतालामा अभ्यङ्ग गर्नाले खुट्टाको रुक्षता नाश गर्दछ, गोडा फुट्ने, झमझमाउने, निदाउने आदि रोगलाई नाश गर्दछ । यसबाट गोडा बलियो हुन्छ, आँखाको दृष्टिमा पनि फाइदा पुग्दछ ।

सुलभ तेलहरूमा नारायण तेल, जीव नारायण तेल, महानारायण तेल, प्रसारिणी

तेल, विषगर्भ तेल, निर्गुण्डी तेल, जैतुनको तेल, वातारी तेल, निवारक तेल आदि पर्दछन् ।

पौष्टिकताको हिसाबले, औषधि सिद्ध तेलहरूमा चन्दनबला लाक्षादि तेल, बला तेल, महानारायण तेल आदि प्रयोग गर्न सकिन्छ ।

कफको वृद्धि बढी भएको बेलामा, अजीर्ण भएको बेलामा, नवज्वर तथा मोटोपनाबाट पीडित अवस्थामा, वमन, विरेचन आदि संशोधन कर्महरू गरेको बेलामा अभ्यङ्ग नगर्नु भन्ने निर्देश छ ।

अभ्यङ्ग गर्दा पनि सबैले आफ्नो प्रकृतिअनुसार गर्नुपर्दछ । दैनिकरूपमा अभ्यङ्ग गर्दा सबैभन्दा बढी वात प्रकृतिका लागि राम्रो हुन्छ, त्यसभन्दा कम पित्त र त्यसभन्दा कम कफ प्रकृतिका लागि हुन्छ । कफ प्रकृति र वात प्रकृतिका लागि तेलले र पित्त प्रकृतिका लागि घिउले अभ्यङ्ग गर्नुपर्ने हुन्छ । (ज्ञातव्य होस् : आफ्नो प्रकृति आफै थाहा पाउने केही तरीकाहरू २०६५ आश्विन अंकको गो.नि.वा.मा प्रकाशित छ ।)

**डा.काशीराज शर्मा सुवेदी**

*(लेखक आयुर्वेद क्याम्पस, कीर्तिपुरका उप-प्राध्यापाक हुनुहुन्छ)*

## पौष महिनाका चाडपर्व

| पौष १ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
|---|---|
| पौष २ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| पौष ३ गते | **तान्त्रोक्त बगलामुखी हवन** |
| पौष ४ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| पौष ६ गते | **दिव्य गुरु महोत्सव** |
| पौष ७ गते | **श्री शिव गोरक्ष हवन** |
| पौष ८ गते | सफला एकादशी व्रत |
| पौष ९ गते | प्रदोष व्रत |
| पौष १० गते | क्रिसमस दिवस |
| पौष २० गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| पौष २३ गते | पुत्रदा एकादशी व्रत |
| पौष २४ गते | प्रदोष व्रत |
| पौष २६ गते | श्री स्वस्थानी व्रत शुभारम्भ |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# हार्दिक बधाई

**श्री बसन्त महर्जन** र **सुश्री विना महर्जन** तथा **सुश्री शर्मिला महर्जन** र **श्री महेशकुमार डंगोल** दाम्पत्य जीवनमा बाधिनुभएकोले हार्दिक बधाई ज्ञापन गर्दै उहाँहरूको सफल दाम्पत्य जीवनका लागि सद्गुरुदेवहरूको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

**अनु श्रेष्ठ**

**सिद्धि महर्जन** **लक्ष्मण आचार्य**

**मदनलाल श्रेष्ठ** **लक्ष्मण कार्की**

# सपनाबाट संस्कारको निर्माण

भनिन्छ मानिसले मात्र सपना देख्दछ, अन्य जीव जनावरहरूले सपना देख्दैनन्। स्वप्न मानव जीवनको यथार्थ व्याख्या हो। सपना मात्र संयोग होइन। जब व्यक्ति निद्रावस्थामा हुन्छ तब उसको व्यक्तित्वले पनि सूक्ष्माकार रूप लिएर भूत र भविष्यसँग सम्पर्क राख्दछ। यही सम्पर्क नै सपनाको कारण र माध्यम बन्दछ। व्यक्ति विशेषको साधना अत्यन्तै प्रबल भएको अवस्थामा उसले जागृतावस्था वा ध्यानावस्थामा भूत, भविष्यका सूक्ष्म आकारहरूसँग सम्पर्क राखेर योगी तथा भविष्यद्रष्टा बन्दछ।

मानिसमा दुई प्रकारका मन विद्यमान छन्– एउटा बाहिरी मन र अर्को भित्री मन अर्थात् अवचेतन मन (Subconscious Mind)। अवचेतन मन शरीरसम्म मात्र सीमित छैन, यो त विश्वको कुनै पनि भागमा जहिले चाह्यो तहिले पुग्न सक्दछ। यसद्वारा तीनै लोकका कुना-कुनाका समाचार पनि प्राप्त हुन सक्दछन्। तसर्थ भूत, भविष्य र वर्तमान तीनै कालको ज्ञान अवचेतन मनबाट मात्र सम्भव हुन्छ।

सपनाबाट हाम्रो संस्कार निर्माण हुन्छ। यसै संस्कारको बलमा हामीले असम्भव प्राय: ठानिएका कार्यहरू पनि सहजरूपमा गर्न सक्दछौँ। सपनाको आधार लिएर पनि परमपूज्य सद्गुरुदेवहरूले आफ्ना शिष्य तथा भक्तहरूलाई आशीर्वाद तथा अनुकम्पा प्रदान गर्नुहुन्छ। सपना यदि सद्गुरुदेवहरूको सदिच्छाअनुसार देखिएको हो र उहाँले आफ्ना कृपाहरू शिष्य तथा साधक साधिकाहरूलाई सपनामार्फत नै प्रदान गर्न यसलाई माध्यम बनाउनुभएको हो भने स्वप्नद्रष्टा परम सौभाग्यशाली हुन्छ। यसपटकको अनुभव-अनुभूति स्तम्भमा आश्रममा जोडिएपछि दिव्य-दिव्य सपना देख्नुहुने पोखरा, गगन गौंडाकी साधिका राजकुमारी गुरुङका केही स्वप्नाभूतिलाई प्रस्तुत गरेका छौं।

–एकदिन सपनामा मैले एकजना होचो कद भएको योगीलाई देखेँ। मेरो घरको पूजा कोठामा पस्नासाथ उहाँ भुइँमा पल्टनुभयो। म डराएर कराएँ। मेरी आमाले धूप बालेर अगाडि राखिदिनु भयो। उहाँले उठेर मलाई अह्राउनुभयो– धनुषवाण समात। त्यसपछि म आकाशमा उडेर धनुषवाण हान्न तयार हुँदा उक्त योगीले मन्त्र दिनुभयो। त्यो मन्त्र वाचन गर्नासाथ मेरो हातमा अनेकौं फूलहरू देखिए जुन फूलहरूलाई योगीको आदेशानुसार मैले मेरो जग्गाको चारैतिर खसालैँ। सपनामा योगीले एउटा जग्गाको कुनामा नजानू भन्नुभएको थियो। उक्त ठाउँमा गएपछि म बिरामी परेँ। एकदिन मैले साथीको घरमा एउटा पत्रिका देखेँ– गोरक्ष निखिल वाणी। मैले पत्रिका पढेँ। त्यसमा छापिएको फोटो त मैले सपनामा देखेको योगी पो हुनुहुँदोरहेछ।

–त्यसपछि मैले सपनामा ब्राह्मणलाई देख्थेँ, त्यो पनि म नछुने भएको तीन वा चार दिनको बीचमा प्राय: देख्थेँ। ब्राह्मणले मलाई भगवान्को टीका लगाइदिन्छु भनेर लगाउन आउनुहुन्थ्यो। म नछुने भएको छु भनेर भाग्न खोज्दा पनि उहाँले त्यो टीका लगाइदिएर नै छोड्नुहुन्थ्यो। त्यसपछि म काम्थेँ। म अति डराउँथे। मैले धेरै भगवान्का नामहरू स्मरण गरेपछि मेरो कम्पन रोकिन्थ्यो।

–गुरुदेवले मलाई राति निद्रामा आएर भन्नुहुन्थ्यो– छोरी यी सबै लुगाहरू बदल। तर मलाई के थाहा कपडा बदल्दाखेरि मेरो रूपै बदलिन्छ भनेर। यो सपना देख्ने दिनमा विन्ध्यवासिनी हवनका लागि एकजना दिदीको घरमा सुतेको थिएँ। हवन सकेर आएको तेस्रो दिनमा काली माताले आफ्ना तीन रूप देखाउनुभयो। तर मैले दुईवटा रूप बिर्सिएँ, एउटा रूप मात्र याद छ।

–एकदिन (२०६५/७/२५ गते) सावरपन्थी दाइले मलाई हिलिङ्ग गरिदिनुभयो। त्यतिबेला मैले आँखा चिम्लेर बस्दा गुरुदेवको शिर आकाशमा टाँसिएको हिउँजस्तै एकदमै प्रकाशपुञ्जले भरिएको देखेँ। उक्त दिन बेलुकी घरमा आएपछि चाँडै नै मलाई निद्रा लाग्यो। म यसरी निदाएँ कि पृथ्वीमाताको चुम्बकत्वले नै मलाई धर्तीमातासँग टाँसेर राखिदिनुभयो। सपनामा उहाँको कपाल फिँजिएको र उहाँले मेरो कानमा आएर 'कान्छी उठ, आज तिमी सारै खुशी छौ' भन्नुभयो। तर म उठ्न भने सकिन।

–२०६५ साल असोज २४ गते राति सपनामा मैले बच्चादेखि नै बारम्बार सपनामा देख्ने गरेको त्यही जङ्गल र त्यही चौरको एक ठाउँमा माटो र खरानीजस्तो वस्तुले बनेको गुरूपादुका देखेँ। गुरु पादुकाको दर्शन गरेपछि म घर गएँ जहाँ मेरो विवाहको तयारी हुँदै थियो। मान्छेहरू सबै नयाँ थिए। म एकदमै रोएँ तर आमालाई भने निकै खुशी देखेकी थिएँ। मलाई अन्माइयो तर बीच बाटोबाटै एकजना ब्राह्मण र ब्राह्मणीले मलाई घरमा फिर्ता ल्याउनुभयो।

–२०६५/७/२७ गते राति सपनामा दैवी शक्तिहरूले एक आपसमा आफ्ना-आफ्ना शक्ति प्रदर्शन गरिरहनुभएको देखेँ।

सपनाका यी अनुभूतिहरू सुनाउने क्रममा भएका गल्ती, कमी-कमजोरीहरूलाई परमपूज्य सद्गुरुदेवहरू र पाठकहरूसँग क्षमा माग्दै यदि तपाईंहरू गुरुसँग जोडिनु भएको छैन, राति सुत्दा नाना थरिका डरलाग्दा र नराम्रा सपना देख्नुहुन्छ भने एकपटक आएर गुरुदेवहरूसँग त जोडिनुहोस्, तपाईंको नराम्रा सपनाहरू कति चाँडै राम्रा र शुभ सपनामा बदलिने छन्, तपाईंको जीवन स्वर्णमय हुनेछ भन्ने आग्रह गर्दै बिदा हुन्छु– जय गुरुदेव !

# शव उदराकर्षणासन

कलाकार तथा मोडलहरूले शरीरलाई आकर्षक बनाइराख्नका लागि, विद्यार्थीहरूले स्मरण शक्ति बढाउनका लागि, रोगीहरूले रोग ठीक पार्नका लागि, स्वस्थ व्यक्तिहरूले स्वास्थ्य रक्षाका लागि, अध्यात्ममा रुची राख्नेले आध्यात्मिक उच्चताका लागि योगलाई अङ्गालेको पाइन्छ । विभिन्न वर्गका मानिसहरूले भिन्न-भिन्न दृष्टिबाट रुची लिएका कारण योग आज व्यापक बन्न पुगेको छ ।

योगको सम्बन्धमा समाज अनभिज्ञ रहेको अवस्थामा यति धेरै प्रचार हुनु, मानिसले रुचाउनु ज्यादै खुशीको कुरा हो । तर योगको वास्तविक स्वरूपलाई भुलेर मानिसहरूले सीमित दायरामा समेट्ने, सीमित स्वार्थ पूर्तिका लागि मात्र अपनाउने चेष्टा गरिरहेका छन् जुन आफैमा दु:खदायी कुरा हो ।

आफ्नो उच्च आध्यात्मिक स्वरूपबाट हटेर योगको माहौल भौतिकता र वैज्ञानिकतातिर यति बढिरहेको छ कि योग आफ्नो मौलिकता नै गुमाउने अवस्थामा पुगिसकेको छ । योगलाई बिस्तारै अन्य विधाहरू समान भौतिक विद्याको रूपमा रूपान्तरित गरिँदैछ । यसबाट समाजले सीमित फाइदा त प्राप्त गर्न सक्दछ तर वास्तविक योगाभ्यासबाट प्राप्त गर्न सकिने मानवको मूल लक्ष्य, आत्मसाक्षात्कार, परमात्मा प्राप्तिको कार्य भने सधैँका लागि थाती नै रहने सम्भावना देखिन्छ ।

आजसम्म योगको क्षेत्रमा जति पनि अनुसन्धान, खोजहरू भए वा हुँदैछन् ती प्राय: सबै नै चिकित्सकीय दृष्टिकोणमा मात्र केन्द्रित रहेका छन् । जस्तै आसनबाट, प्राणायामबाट शरीरको आन्तरिक क्रियाहरू कस्ता हुन्छन्, इन्डोक्राइनोलोजिकल एक्सन, मेटाबोलिक, न्यूरोफिजियोलोजिकल, साइकोसोम्याटिक आदि प्रभावहरूको बारेमा मात्र अध्ययन गरिएका छन् । यी अध्ययनहरूबाट मात्रै वैज्ञानिकहरूले योगको वास्तविकता, विराटतालाई बुझ्न र बुझाउन सक्दैनन् । यसकारण योगको विराटतालाई बुझाउन, अष्टाङ्ग योगको अभ्यास गर्दै परमार्थ प्राप्तिको मार्गमा गतिशील गराउन केवल सद्‌गुरुहरू मात्र सक्षम हुनुहुन्छ । त्यसैले आसन र प्राणायामबाट प्राप्त हुने सीमित फाइदामा मात्र नअल्झेर सद्‌गुरु प्राप्ति गर्दै वास्तविक योगको मार्गमा अग्रसर हुनु नै सम्पूर्ण मानवको आवश्यकता हो, लक्ष्य हो ।

गत अङ्कमा हामीले शरीरलाई बङ्ग्याएर गरिने आसन सुप्त उदराकर्षणासनको बारेमा चर्चा गरेका थियौँ । यस अङ्कमा पनि सुतेर शरीर बङ्ग्याएर गरिने अर्को प्रकारको आसन 'शव उदराकर्षणासन'को बारेमा चर्चा गर्न गइरहेका छौँ ।

शव उदराकर्षणासनलाई 'युनिभर्सल स्पाइनल ट्वइस्ट' आसन पनि भनिन्छ किनभने यस आसनले हाम्रो मेरुदण्डका हड्‌डीहरूलाई राम्रोसँग बङ्ग्याएर व्यायाम गराउँदछ जसबाट ढाड दुख्ने तथा डिस्क प्रोलेप्सजस्ता समस्याहरूमा फाइदा पुग्दछ ।

यस आसन सम्पन्न गर्नका लागि पनि सर्वप्रथम शक्ति सञ्चालन क्रियाका साथै तन्किएर, अगाडि पछाडि झुकेर गरिने आसनहरू, ध्यानका आसनहरूको अभ्यास गर्नुपर्ने हुन्छ । सीधै यो आसनको अभ्यासले फाइदाको सट्टा हड्‌डी तथा मांशपेशीहरू झन् बढी दुख्ने हुन सक्छ ।

**आसन अभ्यासको विधि :**

- सर्वप्रथम उत्तानो परेर सीधा सुत्ने । दुवै खुट्टा र पैतलालाई सँगै राख्ने ।
- दुवै हातलाई कुमको सीधा दुवैतिर तन्काएर सीधा बनाउने । हातका हत्केलाहरू भुइँतिर फर्काउने ।
- बिस्तारै दाहिने गोडा खुम्च्याउँदै माथि उठाउने र पैतला देब्रे गोडाको घुँडामाथि राख्ने । चित्रमा देखाइए जस्तै गरी देब्रे हात दाहिने गोडाको घुँडामा राख्ने । यो नै आसनको शुरुआतको अवस्था हो ।
- दाहिने घुँडा खुम्चिएको र पैतालाले देब्रे गोडामा टेकेकै अवस्थामा बिस्तारै दाहिने घुँडालाई शरीरको देब्रे भागतिर तल झुकाउँदै जमीनतिर लाने ।
- टाउकोलाई दाहिनेतिर मोड्ने र सीधा भइरहेको दाहिने

हातको मध्यमा अर्थात् माझी औंलामा हेर्ने ।

- देब्रे हात दाहिने गोडाको घुँडामा राखेको हुनुपर्दछ भने दाहिने हात र कुमले जमीनलाई छोएको हुनुपर्दछ ।
- घुँडा मोडिएको दिशाको विपरीत दिशामा टाउको मोडिएको हुनुपर्दछ र अर्को गोडा सीधा हुनुपर्दछ ।
- जति समयसम्म आफूलाई आनन्दको अनुभूति हुन्छ त्यति समयसम्म यस अवस्थामा बस्न सकिन्छ ।
- अन्तमा बिस्तारै घुँडा र टाउकोलाई मोड्दै सीधा रेखामा ल्याएर पहिलेको अवस्थामा आउने ।
- देब्रे हात पुन: कुमको सीधा बाहिरतिर तन्काउने साथै दाहिने गोडा पनि सीधा तन्काउने ।
- यसै तवरले विपरीत दिशामा अभ्यास गर्ने ।
- दुवै दिशामा समानरूपमा अभ्यास गर्ने । प्रत्येक चरणमा आसनको मूल अवस्थामा स्थिर रहने समय बढाउँदै लैजाने ।

**आसनमा श्वास-प्रश्वास क्रिया :**

- शुरुको अवस्थामा श्वास लिने ।
- जब घुँडालाई जमीनतिर र टाउकोलाई घुँडा मोडिएको विपरीत दिशामा मोड्न थालिन्छ त्यस समयमा श्वास बिस्तारै फाल्ने ।
- आसनको मुख्य अवस्थामा बिस्तारै गहिरो श्वास लिँदै छोड्ने ।
- अन्तमा श्वास लिँदै घुँडा र टाउकोलाई सीधा रेखामा ल्याउने र श्वास फाल्दै गोडा र हात तन्काउने ।

**ध्यान दिने स्थान :**

शारीरिकरूपमा मनलाई श्वास-प्रश्वास अथवा मेरुदण्डमा ध्यान केन्द्रित गर्ने । अध्यात्मिकरूपमा यसले मणिपूर चक्रको क्षेत्रमा विशेष प्रभाव पार्ने हुनाले त्यस स्थानमा पनि ध्यान केन्द्रित गर्न सकिन्छ ।

**फाइदा :**

शरीर कस्सिएको वा अह्ररिएको अवस्थामा, थकावटमा यस आसनको माध्यमबाट आराम गर्न सकिन्छ । मेरुदण्डका समस्यालाई, दु:खाइलाई शान्त गर्न मद्दत गर्दछ । कटी प्रदेश तथा पेटका अङ्गहरूको राम्रो व्यायाम हुन्छ र तिनीहरूको कार्यलाई सुचारु बनाउन मद्दत गर्दछ ।

**सावधानी :**

कटी प्रदेशको जोर्नी (Hip joint) मा धेरै नै समस्या भएमा यस आसनको अभ्यास गर्नुहुँदैन । आसनको क्रममा शरीरमा केही नमिलेको, गाह्रो, अप्ठेरो अनुभव भएमा आसनको अभ्यास नगर्ने । आसन गर्ने प्रक्रिया स्पष्ट बुझेर मात्र गर्ने । जय गुरुदेव !

## प्रेरक-प्रसंग

भगवान् बुद्ध आफ्ना शिष्यहरूसहित सभामा विराजमान हुनुहुन्थ्यो, त्यसैबेला बाहिर रहेको कुनै व्यक्ति चिच्याएर करायो– 'आज मलाई सभामा बस्ने अनुमति किन नदिएको ?' भगवान् बुद्ध आँखा बन्द गरेर ध्यानमग्न भएर बस्नुभयो । त्यस व्यक्तिले फेरि चिच्याएर यही प्रश्न गऱ्यो । एक शिष्यले बुद्धलाई सोधे– 'भगवान् ! बाहिर उभिएको त्यस व्यक्तिलाई भित्र आउने अनुमति दिनुहोस् ।' भगवान् बुद्धले आँखा खोल्दै भन्नुभयो– 'हुँदैन, त्यो अछुत हो ।' अछुत ! शिष्यहरू आश्चर्यमा परे । बुद्धले उनीहरूको मनोभावना बुझेर भन्नुभयो– 'हो, त्यो अछुत हो ।' शिष्यहरूले सोधे– 'त्यो अछुत किन ? कसरी ? भगवान् ! तपाईं त जातभात, धर्ममा भेद गर्नु हुँदैनथ्यो ।' भगवान्ले भन्नुभयो– 'आज त्यो रिसाएको छ, रीसबाट जीवनको एकता भङ्ग हुन्छ । रिसाहा मानिसले मानसिक हिंसा गर्दछ । कुनै पनि कारणले रिसाउने मानिस अछुत हुन्छ । त्यो केही समय एकान्तमा नै रहनुपर्दछ । पश्चातापको आगोमा तपेर त्यसले स्मरण गर्नेछ कि अहिंसा महान् कर्तव्य हो, परम धर्म हो ।' यसपछि बल्ल शिष्यहरूले बुझे अछुतको वास्तविक रहस्य ।

# एक्काइसौँ शताब्दीमा नेपाल र नेपालीको समुन्नत भविष्य निर्माणको जिम्मा हामी नेपालीकै हातमा छ । त्यसैले हामीमा भएको अपार क्षमतालाई खेर नफालौँ ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

एकातिर यति ठूलो कठोर हृदय र अर्कोतिर यति विघ्न अति संवेदनशील ममत्वले भरिएको व्यक्तित्व !

परमहंस स्वामी श्री निखिलेश्वरानन्दज्यूलाई मैले अत्यन्तै निकटबाट जान्दछु । शताब्दीऔंमा एकाध व्यक्तित्व मात्र यस्तो हुन्छ जसको बारेमा केही भन्न सकिन्छ, जसको बारेमा लेख्नाले आनन्दको अनुभूति हुन सक्छ, जसको नजिक बस्नाले केही यस्तो आभास हुन्छ कि हामी यस व्यक्तित्वबाट केही प्राप्त गरिरहेका छौं र यस्तै व्यक्तित्वका धनी हुनुहुन्छ– स्वामी निखिलेश्वरानन्दज्यू ।

तर उहाँको न्यूनता यो हो कि उहाँले आफूलाई प्रचार-प्रसारबाट धेरै टाढा राख्नुभयो, आफैलाई विज्ञापित गर्नु र प्रचार पाउने कोशिश गर्नु उहाँको स्वभावमा छैन । उच्चकोटिको संन्यासी सम्मेलनमा जब उहाँलाई अध्यक्ष पदका लागि आमन्त्रित गरिँदा पनि अत्यन्त विनम्रतापूर्वक अस्वीकार गर्नुहुन्थ्यो । ज्ञान त निखिलेश्वरानन्दज्यूमा थियो, जति शक्ति र सामर्थ्य उहाँसँग छ त्यसको एक अंश पनि अर्को कुनै व्यक्तिमा भएको भए उसले चिच्याएर भए पनि आफ्नो बारेमा बताउँथ्यो होला, पूरा संसार उसको चारैतिर फिँजिन्थ्यो होला । तर यस व्यक्तित्वमा यस्तो कुनै पनि थिएन ।

जुन दर्प, जुन विशालता, जुन प्रखरता र जुन प्रचंडता उहाँको जीवनमा मैले देखेँ, जुन त्यागवृत्ति र निस्पृहता मैले उहाँप्रति आफ्नो संन्यास जीवनमा अनुभव गरेको थिएँ त्यो आफैमा एउटा उदाहरण हो । सैयौं सैयौं संन्यासी शिष्य उहाँको शिष्यत्व प्राप्तिका लागि आतुर भएका थिए, हजारौं योगी र संन्यासी व्यग्र भएका थिए उहाँको समीप केही छिन बस्नका लागि, उहाँबाट केही सिक्नका लागि र उहाँबाट धेरै प्राप्त गर्नका लागि । उहाँले सबैलाई धेरै दिने प्रयास गर्नुभयो, उहाँको द्वार सधैं सबैका लागि खुला थियो, न कुनै व्यस्तताको भाव राख्नुभयो, न व्यर्थको अहंकार नै । त्यसैले आज हिमालयका हजारौं-हजार संन्यासी परमहंस स्वामी श्री निखिलेश्वरानन्दज्यूको नाम स्मरण हुनासाथ श्रद्धाले निहुरिन्छन्– भलै उनीहरूले यस विशाल व्यक्तित्वलाई देखेका हुन् वा नहुन् । हिमालयको कण-कणमा उहाँको व्यक्तित्व गुंजरित छ, र उहाँले हिमालयलाई पूरै भारतवर्षमा परिचित गर्नमा जुन योगदान दिनुभयो, साधनाको पूर्णताका लागि जुन प्रयत्न गर्नुभयो त्यसको त कुनै उदाहरण छैन ।

महामुनि भृगु महाराजसँग त सबै परिचित छन्, उहाँले बताउनु भएको छ–

मैले उहाँलाई धेरै धेरै रूपमा देखेको छु । कठिन साधनाहरूद्वारा सफलता प्राप्त गर्नुहुँदै, विचलित साधकहरूलाई धैर्य दिएर साधनात्मक पूर्णता दिलाउनुहुँदै, सिद्धाश्रमको कठोर नियम र जड नियमविरुद्ध उभिएर परिवर्तन ल्याउँदै, आफ्ना शिष्यहरूका लागि जुधेर उनीहरूलाई अधिकार दिलाउँदै, उनीहरूको दु:खमा भावविह्वल भएर क्रोधको अग्निपुञ्ज बन्नुहुन्थ्यो र शिष्यहरूको परीक्षा लिनुहुँदा असमय र असमर्थता व्यक्त गर्दै विपरीत परिस्थितिहरूको सामु छाती फुलाएर उभिनुहुन्थ्यो । अविचलित गतिबाट अगाडि बढेर प्रवचनबाट लाखौं-लाख मानिसहरूलाई मन्त्रमुग्ध पार्नुभएको मैले देखेको छु । उहाँका सैकडौं रूप छन् र प्रत्येक रूपमा उहाँ सर्वाङ्गपूर्ण हुनुहुन्छ । यस्तो व्यक्तित्व साधकहरूका लागि आदर्श हो भने सिद्धहरूका लागि गौरवमय ।

मलाई विश्वास छ कि आफ्नो गुरु कर्तव्यलाई पूर्णता दिएपछि उहाँ सिद्धाश्रममा आएर साधनात्मक तेजस्विताबाट यस सिद्धाश्रमलाई प्राणवान्, चैतन्य र सुगन्धित रूपले सुवासित बनाउनुहुन्छ तथा सिद्धाश्रमको संचालन आफ्नो हातमा लिएर यसलाई अधिक दिव्य तेजस्वितायुक्त र पूर्णता प्रदान गर्नुहुन्छ । क्रमश:

जय गुरुदेव !

**याद राख ! जीवनमा गुरुको आज्ञा नै सर्वोपरि हुन्छ । त्यसको औचित्य अनौचित्य निर्धारण गर्ने तिमी (शिष्य) हरुको कार्य होइन, धर्म होइन ।**

**-परमपूज्य सद्‌गुरुदेव**

# चिर शान्तिको कामना

जन्म
२००५ साल ज्येष्ठ ४ गते

स्वर्गारोहण
२०६५ कार्तिक २६ गते

## स्व. नारायणलाल श्रेष्ठ

हाम्रा छोरा श्री नारायणलाल श्रेष्ठको असामयिक निधन भएको ४५ औं दिनको पुण्यतिथिमा दिवंगत आत्माको चिर शान्तिको लागि सद्गुरुदेवहरूको चरणकमलमा हार्दिक प्रार्थना गर्दछौं साथै यस दुःखद घडीमा समवेदना व्यक्त गर्नुहुने सम्पूर्ण महानुभावहरूप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछौं ।

**आमा- शुभलक्ष्मी श्रेष्ठ**
**श्रीमती- अम्बिका श्रेष्ठ**
**दाजु/भाउजु- लक्ष्मण श्रेष्ठ, गोपाल श्रेष्ठ, प्रकाश श्रेष्ठ**
**भाइ/बुहारी- सानुलाल श्रेष्ठ, अशोककुमार श्रेष्ठ**
**बहिनी ज्वाईं- मैंया श्रेष्ठ**
**छोरा बुहारी- योयन्द श्रेष्ठ**
**छोरी ज्वाईं- मञ्जु श्रेष्ठ, अञ्जु श्रेष्ठ**
**नाति- रक्षक श्रेष्ठ**

साबर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

## नित्यता:

नित्यता भन्नाले सामान्य अर्थमा नित्य गरिने कार्यलाई बुझिन्छ । दैनिक जीवनमा नित्यताको ठूलो महत्त्व रहँदै आएको छ । प्रत्येक कार्यलाई नित्यता दिन सकेमा जुनसुकै कार्यमा पनि सफलता प्राप्त गर्ने कुरामा कुनै शंका रहँदैन । मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले नित्यतालाई पालना गर्नुपर्ने हुन्छ, नित्यतालाई लागू गर्नुपर्ने हुन्छ, यसलाई दैनिक जीवनमा उतार्नुपर्ने हुन्छ । मन्त्र साधनाको सफलता नित्यतामा लुकेको कुरामा दुईमत नहोला । त्यसैले साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले नित्यताको नियमलाई पालना गर्नुपर्दछ ।

मन्त्र साधनामा अगाडि बढ्नेहरूले नित्यता भन्नाले आफूले प्राप्त गरेका मन्त्रहरूलाई नित्य जप गर्ने भन्ने बुझ्नुपर्दछ । साधना गर्ने भइसकेपछि आफूले प्राप्त गरेका साधनाहरूलाई दैनिकरूपमा गर्नुपर्दछ । सकिन्छ भने साधना गर्ने समय नित्य एउटै होस्, अर्थात् प्रत्येक दिन एउटै समयमा साधना गर्ने बानीको विकास गर्नुपर्दछ। यसरी नित्यरूपमा सधैँ एउटै समयमा साधना गर्ने अभ्यास गर्नाले साधनामा सफलताको लागि ठूलो सहयोग पुग्दछ ।

मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले अलि होशियारी हुने, सतर्कता अपनाउने गर्नुपर्दछ। आफूलाई मन लाग्दा मन्त्र जप गर्ने नलाग्दा नगर्ने, मन लागे धेरै समयसम्म धेरै माला पनि जप गर्ने, नलाग्दा साधना नै नगर्ने गर्नु हुँदैन । अल्छी गर्ने, अनावश्यक बहाना गरेर साधना नगर्ने गर्नु हुँदैन। यस्तो गर्दा नित्यता टुट्न जान्छ । कुनै दिन पनि नछाडिकन, नबिर्सिकन, दैनिकरूपमा गरिने प्रक्रिया हो– नित्यता । यसैले साधनामा पूर्णता चाहनेहरूले, साधनामा सफलता चाहनेहरूले धैर्यवान् भएर, लगनशील भएर नित्यरूपमा साधना गर्दै अगाडि बढ्नुपर्दछ । आफूले गर्ने दैनिक क्रियाकर्म तालिकामा राखी गर्दै जानुपर्दछ । हामी प्रत्येक दिन उठेर बाथरुम जान्छौँ, ब्रस गर्छौँ, मुख धुन्छौँ, चिया खान्छौँ, खाना खान्छौँ र आफ्नो कर्म गर्छौँ । यसरी गरिने कर्म जसलाई नित्यकर्म भन्दछौँ, यस्तै नित्यकर्मभित्र मन्त्र साधनालाई पनि राख्नुपर्दछ र नित्यरूपमा गर्नुपर्दछ ।

हामी प्राप्ति छिटो चाहन्छौँ, सफलता छिटो चाहन्छौँ तर आफूले गर्ने नित्यतालाई हामी गर्दैनौँ अनि सफल भएन भनेर निराश हुन्छौँ । त्यसैले निरन्तररूपमा आफ्नो साधना नित्यरूपमा सम्पन्न गर्दै अगाडि बढ्दै जाऔँ, नित्यतालाई पालना गरौँ, साधनामा सफलता हासिल गरौँ ।

जय गुरुदेव !

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

# गुरू गीता

आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।

**मधुलुब्धो यथा भृङ्गः**
**पुष्पात् पुष्पान्तरं व्रजेत् ।**
**ज्ञानलुब्धस्तथा शिष्यो**
**गुरोगुर्वन्तरं व्रजेत् ॥१३१॥**

भावार्थ : जसरी फूलको रसको लोभी भमरा एउटा फूलबाट अर्को फूलमा भ्रमण गर्दछ, त्यस्तै प्रकारले जिज्ञासु शिष्यले कुनै गुरुबाट यथोचित ज्ञान प्राप्त नभएमा सो भन्दा श्रेष्ठ गुरुकहाँ अवश्य जानुपर्छ । धेरै व्यक्तिहरूलाई यस्तो भ्रम हुन्छ कि एकपटक कसैलाई गुरु मानिसकेपछि अर्को गुरुकहाँ जानु उचित हुँदैन तर यस्तो विचार गर्नु अनुकूल हुँदैन । जहाँ सद्ज्ञान प्राप्त हुन्छ त्यहाँबाट ज्ञान अवश्य ग्रहण गर्नुपर्छ ।

**तार्किकाः छान्दसाश्चैव**
**दैवज्ञाः कर्मठाः प्रिये ।**
**लौकिकास्ते न जानन्ति**
**गुरुतत्त्वं निराकुलम् ॥१३२॥**

भावार्थ : तार्किक (न्याय शास्त्रका प्रवक्ता), छान्दस (वैदिक), दैवमय (ज्योतिष), कर्मकाण्डी तथा अनेक लौकिक विद्याहरूको जानकार व्यक्ति पनि गुरु तत्त्वलाई निश्चितरूपले जान्न सक्दैनन्, यस्ता व्यक्तिहरूलाई आफ्नो क्षेत्रमा ज्ञानवान् भएको प्रतीत हुन्छ तथा यस प्रकारको गर्वबाट छुटकारा पाउन सक्दैनन् र अहंकारमा हराएर शिष्यत्वको भावनाबाट शून्य हुन्छन् । गुरु तत्त्वलाई त समर्पण र श्रद्धाले मात्र प्राप्त गर्न सकिन्छ ।

**यज्ञिनोऽपि न मुक्ताः स्युः**
**न मुक्ता योगिनस्तथा ।**
**तापसा अपि नो मुक्ता**
**गुरु तत्त्वात्पराङ्मुखाः ॥१३३॥**

भावार्थ : धेरै ठूला-ठूला यज्ञ विधानहरूमा व्यस्त याज्ञिकहरू, यौगिक क्रियाहरूमा संलग्न योगीजन तथा कष्टपूर्ण तपमा लागेका तपस्वीहरू पनि गुरु तत्त्वबाट विमुख भएका छन् भने उनीहरूले मुक्ति पाउँदैनन् । मुक्तिको अर्थ हुन्छ– जन्म-मरण चक्रबाट अलग हुनु र यस चक्रबाट निस्कन गुरु तत्त्वलाई नबुझुन्जेल सम्भव छैन । गुरु तत्त्वलाई बुझ्नका लागि पवित्र, अहंकाररहित अन्तष्करणको आवश्यकता पर्दछ ।

**ज्ञानस्वरूपं निजभावयुक्तम्**
**आनन्दमानन्दकरं प्रसन्नम् ।**
**योगीन्द्रमीड्यं भवरोगवैद्यं**
**श्रीमद्गुरुं नित्यमहं नमामि ॥१३४॥**

भावार्थ : ज्ञानमय, चिन्मय स्वरूपमा अवस्थित, परमानन्द स्वरूप, शरणागत शिष्यहरूलाई आनन्द प्रदान गर्ने, सदा प्रसन्न मुद्रामा रहने, योगीश्वर, स्तुतियोग्य, भवरोगका एक मात्र वैद्य श्री गुरुका श्रीचरणमा नमस्कार गर्दछु । भवरोगको अर्थ हो- जीवले आफ्नो ब्रह्ममय स्वरूपलाई बिर्सनु । जीव आफूलाई एउटा साधारण प्राणी मात्र ठान्दछ, जब ऊ आफ्नो स्वरूपलाई गुरु-कृपाले चिन्दछ तब नै मृत्यु-पाशबाट विमुक्त हुन्छ ।

# श्री निखिलेश्वर शतकम्

॥१०५॥

**प्रत्यक्षतोऽथ च परोक्षविधैस्तपस्वी,**
**यः सर्वमंगलविधानपरो सदैव ।**
**ज्ञानं, श्रियं, सुशममेव जगत्यवर्षत्;**
**तं वन्दनीयचरितं स्वगुरुं प्रणौमि ॥**

पूर्वी संस्कृतिको यो विशेषता हो कि यहाँका ऋषि-मनीषिले विश्वकल्याणका लागि निस्वार्थ भावले चिन्तन गर्नुका साथै कसैको प्रेरणा वा अनुरोधबिना पनि उसलाई प्रत्यक्ष वा अप्रत्यक्षरूपमा व्यावहारिक परिणति गर्नुहुन्छ । यस कार्यका लागि उहाँहरूको तपस्याको ऊर्जाको सूक्ष्म वैचारिक स्पन्दनले सम्पूर्ण ब्रह्माण्डव्यापी चेतनालाई आफ्नो अनुकूल परिवर्तन गर्दछन् । भावनामा सर्वत्र विद्युतीय चुम्बकीय तरङ्गहरू हुन्छन्, तसर्थ विश्व मङ्गलको दृढ संकल्प मंत्रशक्ति त्यसैबाट फलदायी हुन्छन् । उक्त परम्परालाई आज पनि जीवित राख्ने, प्रत्यक्ष वा परोक्षरूपमा विश्व मङ्गलमा सदैव तल्लीन, संसारमा ज्ञान, श्री एवं शान्तिको अजस्र वर्षा गराउने यस्ता वन्दनीयचरित सद्गुरुदेव निखिलेश्वरप्रति म श्रद्धासहित सतत प्रणाम अर्पण गर्दछु ।

॥१०६॥

**यच्चेतना चितिमयाः रविरग्निचन्द्राः,**
**तद्रोमरोमकुहरं ऋतचित्प्रकाशैः ।**
**आपूर्य मां स्नुतकृपाभिरलंकरोतुः;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

सम्पूर्ण ब्रह्माण्डमा गुरुतत्त्वको चरमस्वरूप (निराकार ब्रह्मको विशुद्ध सत्, चित् एवं आन्दमयस्वरूप) को सर्वातीत चेतना व्याप्त भएकोले व्यष्टि तथा समष्टिमय चौध भुवन तथा देवता, मानिस, तिर्यक् (पशु, पक्षी, सरीसृपादि) सम्पूर्ण जीवनमयी स्थूल, सूक्ष्म शरीरधारी उनैबाट प्रकाशित हुन्छन् । तसर्थ जसका अनन्त ब्रह्माण्डवर्ती चेतनाबाट चेतना पाएर तेजका प्रतीक सूर्य, चन्द्र एवं अग्नि पनि प्रकाशित हुन्छन् त्यस्ता परम चेतनापुञ्ज गुरुदेव आफ्नो ऋतम्भरा प्रज्ञा संवलित चित्प्रकाशबाट मेरा रोम-प्रतिरोमका प्वालहरूलाई (यो मात्र होइन मेरो शरीरका प्रत्येक अणु, परमाणुलाई) परिपूर्ण गरेर आफ्नो परम कृपावृष्टिबाट मेरो जीवन समलङ्कृत गरिदिनु होस्; म यही प्रार्थनाका साथ गुरूप्रवर निखिलेश्वरानन्दज्यूका चरणकमलको वन्दना गर्दछु ।

## मासिक हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक कार्यक्रम अन्तर्गत हरेक महिनाको पहिलो हप्ता सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरू गत मंसिर महिनामा पनि सम्पन्न भयो जस अन्तर्गत मंसिर २ गते सोमबार पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, मंसिर ३ गते मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, मंसिर ४ गते बुधबार लखनखेलस्थित माता महालक्ष्मीको मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन, मंसिर ५ गते बिहीबार कुम्भेश्वर पाटनस्थित माता बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजेदेखि सञ्चालन भएको थियो भने बाँकी हवन कार्यक्रमहरू बिहान ८:०० बजेबाट सञ्चालन भएका थिए ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरण तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत मंसिर महिनाको ६ गते (२१ नोबेम्बर, २००८) स्थानीय गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा उक्त कार्यक्रम सम्पन्न गऱ्यो । गोरक्ष निखिल स्तवनको सामूहिक पाठ गरी बिहान १०:१५ बजेदेखि शुभारम्भ भएको उक्त कार्यक्रम दुई चरणमा विभाजित थियो जसअन्तर्गत पहिलो चरणमा गुरु पूजन, मन्त्र जप, हवन, आरती आदि कार्यक्रमहरू रहेका थिए जसमा सद्गुरुदेवहरूको चरण पादुकाको दिव्य पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा पनि वहन गर्दै साधिका शिवकुमारी बराल, कल्पना थापा र साधक अनिल घिमिरेले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरणको शुरुआतमा सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गुरुसेवा दल नं. १५ का सदस्य साधक आशिष अधिकारीले स्वागत मन्तव्य राख्नुभएको थियो । दोस्रो चरणको अन्य कार्यक्रमअन्तर्गत भजन, कीर्तन, नृत्य, प्रवचन/स्ववचन आदि रहेका थिए । प्रवचनको क्रममा सावर पन्थी नं.२ सदस्यज्यूले आफ्नो भनाइ राख्नुभएको थियो । सोही अवसरमा साधिका सुनिता न्यौपानेले सिद्धाश्रम शक्ति केन्द्रको व्यवस्थापनमा सञ्चालित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको अक्षयकोषको लागि रु. १,११,१११।- (एक लाख एघार हजार एक सय एघार) रूपैयाँ प्रदान गर्नुभएको थियो । सावर पन्थी नं.३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको उक्त कार्यक्रममा कोटेश्वरको प्रचारप्रसार केन्द्र सोही दिनदेखि नै आरती संचालन केन्द्रको रूपमा रूपान्तरित भएको जानकारी गराउनुभएको थियो ।

## प्रशिक्षण कार्यक्रम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय गोरखा, कास्की र चितवनमा हालै कार्यकर्ता प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । सम्पर्क कार्यालय गोरखामा सावर पन्थी नं. १ ज्यू, सम्पर्क कार्यालय चितवनमा सावर पन्थी नं. २ र सम्पर्क कार्यालय कास्कीमा सावर पन्थी नं. ३ ज्यूले सहभागी कार्यकर्ताहरूलाई प्रशिक्षण प्रदान गर्नुभएको थियो । मंसिर २३ गते सम्पर्क कार्यालय गोरखा, २५ गते सम्पर्क कार्यालय रामघाट, २६ गते लेखनाथ एवं चितवन जिल्लाको क्षेत्रपुर र गौरीगञ्ज सम्पर्क कार्यालयका कार्यकर्ताहरूबीचमा प्रशिक्षण कार्यक्रम सम्पन्न भएको थियो ।

सम्बन्धित सम्पर्क कार्यालयहरूमा गुरुकार्य गर्नुहुने कार्यकर्ताहरूका लागि आयोजित उक्त प्रशिक्षण कार्यक्रमबाट कार्यकर्ताहरूमा जोश, जाँगर र उत्साह थपिनुका साथै अन्तरक्रियात्मक ढंगबाट कार्यक्रम सञ्चालन भएकोले उहाँहरूका विभिन्न जिज्ञासाहरूको पनि उक्त अवसरमा समाधान गरिएको थियो ।

## पाल्पामा गुरु गोरखनाथको मूर्ति

पाल्पा जिल्ला ताहुँ गा.वि.स.को तल्लो मलेडमा गत मंसिर १६ गते सोमबारका दिन स्थानीय गोरखनाथ क्लबद्वारा निर्मित मन्दिरमा आराध्यदेव श्री श्री महायोगी गुरु गोरखनाथको मूर्ति एक समारोहका बीच स्थापना गरियो । उक्त अवसरमा स्थानीय मगर पूजारीद्वारा आफ्नै विधि विधानद्वारा पूजन सम्पन्न गरिएको थियो साथै सिद्धाश्रम केन्द्रको नित्य आरती पनि उक्त अवसरमा सम्पन्न भएको थियो ।

## आश्रम भवन शिलन्यास

काठमाडौंमा बौद्ध सिमल्टारमा रहेको आरती सञ्चालन केन्द्रले गत मङ्सिर २३ गते सोमबार आश्रम भवनको शिलान्यास सम्पन्न गऱ्यो । शिलान्यास कार्यक्रममा स्थानीय वासिन्दाहरूको उपस्थितिमा साधक लक्ष्मण कार्कीले गुरु पूजन तथा शिलान्यास गर्नुभएको थियो ।

**कण-कणमा गोरख जगाऔं**

## आध्यात्मिक नेतृत्वकर्ताको तालिम

परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिना आफ्ना कार्यकर्ताहरूलाई तहगतरूपमा तालिम तथा प्रशिक्षण प्रदान गर्दै आउने क्रममा गत मङ्सिर २० र २१ गते आध्यात्मिक नेतृत्वकर्ता तहको तालिम सम्पन्न गऱ्यो । काठमाडौँको कमलपोखरीस्थित जैन भवनमा सम्पन्न उक्त तालिम कार्यक्रममा सहभागी हुन देशका विभिन्न स्थानबाट कार्यकर्ताहरू आउनुभएको थियो । द्विदिवसीयरूपमा सञ्चालित उक्त तालिम कार्यक्रम दुवै दिन बिहान १०:०० बजे प्रार्थनाबाट शुरु भई सद्गुरुदेवहरूको स्तुति-वन्दना, गुरु-पूजन सम्पन्न भएपश्चात् विभिन्न विषयमा प्रशिक्षण सम्पन्न भई बेलुकी ५:०० बजेको गुरु आरतीपछि सम्पन्न भएको थियो । प्रशिक्षणको बीच-बीचमा चुड्का भजन, नृत्य, आदि क्रमहरू पनि समावेश भएका थिए । प्रशिक्षणको क्रममा गुरु भक्ति, नियम-अनुशासन, आश्रम प्रशासन, आन्तरिक संगठन, बाह्य संगठन, जीवनमा ध्यानको महत्त्व आदि विषयहरू समावेश भएका थिए । कार्यक्रममा प्रयोगात्मकरूपमा विशेष ध्यान पनि प्राप्त भएको थियो ।

गुरु-पूजनको क्रममा पहिलो दिन साधिकाहरू विमला प्याकुऱ्याल, रीता पौडेल, शकुन्तला पहारी तथा साधक दिनकुमार के.सी. र दोस्रो दिन साधिकाहरू लक्ष्मी तझ्या, सुशीला तझ्या, रीता खत्री, मीरा तुलाचन तथा साधक दिलीप पियाले गुरु-पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङ्गअनुसार प्रशिक्षार्थीहरूमध्येबाट कार्यकर्ताहरू रामदेवी प्रधान, सुलोचना बानियाँ, कौशलकुमार पौडेल, विमला प्याकुऱ्याल, रामहरि तिमिल्सिना गुरुसेवा दलको वैकल्पिक हरियो रंगमा प्रवेश गर्न सफल हुनुभएको थियो । कार्यक्रम निकै उपलब्धिमूलक रहेको प्रशिक्षित कार्यकर्ताहरूको भनाइ थियो ।

## अन्तरविद्यालयस्तरीय हाजिरी जवाफ

सिद्धाश्रम शक्ति केन्द्रको व्यवस्थापनमा सञ्चालित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले गत मंसिर ७ र ८ गते 'महाभारत' शीर्षकमा नेपालमा पहिलोटक अन्तरविद्यालयस्तरीय हाजिरी जवाफ प्रतियोगिता सम्पन्न गऱ्यो ।

सहभागी काठमाडौँ उपत्यकाका विभिन्न विद्यालयहरूमध्येबाट पहिलो दिनको प्रतिस्पर्धाबाट ६ विद्यालय मात्र अन्तिम चरणमा प्रवेश गर्न सफल भएका थिए । ६ विद्यालयबीचको अन्तिम चरणको प्रतिस्पर्धाबाट युनिभर्सल उच्च माध्यमिक विद्यालयले प्रथम स्थान प्राप्त गर्न सफल भएको थियो । दोस्रो र तेस्रो हुने स्कूलहरूमा क्रमशः गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम र नेपाल पुलिस स्कूल रहेका थिए ।

प्रतियोगितामा सान्त्वना पुरस्कार अल्फा स्कूलले प्राप्त गरेको थियो । सिद्धाश्रम शक्ति केन्द्र नेपाल सावर पन्थी नं. १ र २ का सदस्यज्यूद्वयले विजयी समूहहरूलाई शिल्ड, कप तथा प्रमाणपत्र प्रदान गर्नुभएको थियो ।

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्रांगणमा सम्पन्न उक्त द्विदिवसीय कार्यक्रम परमपूज्य सद्गुरुदेवहरूको प्रार्थनाबाट बिहान ११:०० बजे शुभारम्भ भएको थियो । आध्यात्मिक भावभूमिमा सम्पन्न यस्तो कार्यक्रमले विद्यार्थीहरूको सामान्य ज्ञानको अभिवृद्धि गर्ने मात्र नभएर उनीहरूलाई चरित्रवान् र आदर्श बन्न प्रेरित गर्नुका साथै आध्यात्मिक ज्ञान पनि प्रदान गर्दछ भन्ने अपेक्षा गरिएको छ ।

## जाँदा जाँदै

कुकुरको पुच्छर १२ वर्ष ढुंग्रामा राखे पनि उस्तै भन्ने नेपाली उखान अहिले आएर हाम्रो वर्तमान राजनीतिक परिप्रेक्षमा, हाम्रो देश काल र परिस्थितिमा उतिकै सान्दर्भिक भएर उभिएको छ । एउटापछि अर्को, अर्कोपछि अर्को गर्दै हामी नेपालीहरु परिवर्तनको चाहनामा अब केही भैहाल्छ कि भनेर परिवर्तनका लागि प्राणाहुति गर्न पनि पछि नपरीकन अग्रसर भएर आयौँ । तर जतिसुकै ठूलो परिवर्तन आए पनि, प्रजातन्त्र र लोकतन्त्रका ठूला-ठूला शब्द अभिव्यक्त भए पनि वास्तविकरुपमा जनताले राहतको सास फेर्न अझै पाएका छैनन् । राहतको त के कुरा गर्नु, पहिले जति भए पनि हुन्थ्यो भन्ने स्थिति पो बन्दै गइरहेको छ । हरेकपल्टको परिवर्तनपछि हामीले यही विडम्बना भोग्दै आइरहेका छौँ । परिवर्तन हुनुअघि सोच्छौँ यसले त केही गर्छ कि, फलानो पार्टीबाट त केही हुन्छ कि, फलानो नेताबाट त केही हुन्छ कि ? सबैमा आश हुन्छ । तर त्यो आशलाई साकार रुप दिएर त्यो आश अनुरुपको शासनशैली र सत्ता सञ्चालन गरेर तपाईं हामीलाई राहत दिन सक्ने त्यस्ता नेता नेपालमा कहिल्यै जन्मेनन् । न त त्यस्ता इमान्दार नेता नै भए जसले आफ्नो भन्दा देशको हित सोचून् । एकाध भएका त्यस्ता इमान्दार नेताहरु पनि ओझेल पर्दै गए, उनीहरुलाई पछाडि धकेलियो । सत्य सधैं सत्य नै हुन्छ । सत्यलाई धेरै समय सम्म पछाडि पार्न सकिँदैन । झूटको खेती धेरै बेर चल्दैन । यो तपाईं हामीले सुन्दै र भोग्दै आइरहेको कुरा पनि हो । त्यसैले अब यस्तो अन्यौल र कहालीलाग्दो वातावरणमा हामीले हाम्रो देशलाई कसरी बचाउने ? हामी नेपालीहरु कसरी यस्तो अवस्थाबाट मुक्त हुने ? सधैँको यो उत्पीडन, सधैँको यो अन्यौलग्रस्त जीवन, सधैँको यो आशैआशले अब आम जनतामा घोर निराशा छाइसकेको छ । छातीमा हात राखेर सोधौँ प्रत्येक नेपालीलाई कसैले पनि अब यो भन्दैन कि फलानो आए यस्तो होला फलानो आए उस्तो होला किनकि जति जोगी आए पनि कानै चिरिएको भन्ने उखान हाम्रो नेपाली राजनीतिमा चरितार्थ भइसकेको छ । यस्तो किन हुन्छ त ? यो कसरी भैरहेको छ त ? के कारण छ त्यस्तो जसले जस्तोसुकै परिवर्तनलाई पनि, जस्तोसुकै अप्ठ्यारालाई पनि लत्याउँदै फेरि पूर्ववत् स्थितिमा नै ल्याउँछ । झन्झन् देश दलदलमा फस्दै गइरहेको छ । विदेशीहरुको हस्तक्षेप तपाईं हाम्रो आँखै अगाडि बढ्दै गइरहेको छ । तपाईं हामी टुलुटुलु हेरेर बस्नु बाहेक अरु केही गर्न सक्ने स्थितिमा छैनौँ । नेताहरु कुरा त गर्छन् तर भित्रभित्रै के गर्छन् कसो गर्छन् त्यो कसैलाई थाहा हुँदैन । कुनै पनि कुराको पारदर्शिता छैन । वास्तवमै भन्नुपर्दा अहिले हाम्रो देश, हाम्रो सार्वभौमता, हाम्रो सार्वभौम सत्ता खतरामा परेको छ । यो वास्तविकता सबैलाई थाहा हुँदाहुँदै पनि देशप्रतिको माया, देशप्रतिको प्रेम र नेपालीहरुको दायित्व हामीले किन निर्वाह गर्न सकिरहेका छैनौँ ? किन हामी बोल्न सक्तैनौँ, किन हामी एकजुट हुन सक्तैनौँ, किन हामी यी समस्या विरुद्ध लड्न सक्तैनौँ ? किनकि यसको पछाडि एउटै उत्तर छ हाम्रो संस्कारमा यी कुराहरु शायद अब हराउँदै गइरहेका छन् । हिजोका दिनमा राष्ट्र भनेपछि मरिहत्ते गर्ने नेताहरु, जनताको सेवालाई नै राजनीति ठान्ने ती महान् नेताहरु आज पैसालाई पूज्न थालेका छन्, पैसालाई बुझ्न थालेका छन् र पैसामा नै राष्ट्रियता बेच्न थालेका छन् । यस्तो अवस्थामा तपाईं हामी कराएर, बोलेर, अथवा एकाध ठाउँमा बसेर विरोध गरेर केही हुनेवाला छैन । यो अवस्थाबाट पार पाउनका लागि त हामीले हाम्रो संस्कारमा परिवर्तन गर्नु जरुरी छ । संस्कार त्यति सजिलै परिवर्तन हुँदैन । संस्कार बनाउन पनि समय लाग्छ र बनेको संस्कारलाई परिवर्तन गर्न पनि त्यत्तिकै समय लाग्छ । राजनीति भन्नासाथ नै कमाउने, सात पुस्तालाई धन सम्पत्ति थुपार्ने, आफ्ना आफन्तलाई मालामाल बनाइदिने, चाहे देश डुबोस्, चाहे जनता मरुन्, केही मतलब नगर्ने । यस्तो किसिमको संस्कार नै अब त पूर्णरुपमा राजनीतिक नेता तथा कार्यकर्ताहरुमा स्थापित हुँदै गइसकेको छ किनभने प्रजातन्त्र प्राप्तिपछिका पछिल्ला चरणहरुलाई हामीले हेर्‍यौँ भने यो एउटा संस्कार नै बनिसकेको भन्दा अत्युक्ति नहोला । जुनसुकै सरकार आए पनि यहि कुरालाई निरन्तरता दिएका छन् । देश विकास, राष्ट्रियताको रक्षा, समग्र जनताको कल्याणको लागि सोच्ने कुनै त्यस्ता सपूत नेपालमा जन्मँदै जन्मेनन् र जो जन्मे तिनीहरु पनि पाखा लगाइए, अन्तै धपाइए, विभिन्न निहुँ र बहानामा पछाडि पारिए । त्यसैले हामी सबैले संस्कारको कुरा गर्दा हामीभित्र भएको यो कुसंस्कारलाई हटाएर जबसम्म सुसंस्कारलाई स्थापित गर्न सक्तैनौँ तबसम्म कुनै राजनैतिक परिवर्तनले देशको कल्याण सम्भव छैन । एकाध व्यक्तिको कल्याण त होला तर समग्र देश र जनताको कल्याणका लागि त प्रत्येक राजनेताको संस्कारमा परिवर्तन हुनु जरुरी छ । प्रत्येक राजनैतिक कार्यकर्ताको संस्कारमा परिवर्तन हुनु जरुरी छ । प्रत्येक प्रशासकको संस्कारमा परिवर्तन हुनु जरुरी छ । जसले देश हाँक्दछन् उनीहरुको संस्कारमा परिवर्तन हुनु जरुरी छ । तर यो परिवर्तन त्यति छिटो र सजिलो सम्भव चाहिँ छैन । यसका लागि प्रयास, प्रयत्न हरतर्फबाट, हरक्षेत्रबाट थाल्नु जरुरी छ । अन्यथा हामी दिन प्रतिदिन संस्कारहीन बन्दै गइरहेको यो समाजमा पिल्सिएर अब यस्तै त हो नि, मैले गरेर के हुन्छ भन्ने भावनामा, एउटा हीनताबोधमा बाँचिरहने हो भने न त तपाईं हाम्रो कल्याण सम्भव छ, न त यो राष्ट्रको नै कल्याण सम्भव छ । विदेशीले आएर चलाइदिनु पर्ने, विदेशीले आएर नदिए खान नपाउने, हर कुरामा अरुको मुख ताक्ने, यस्तो संस्कार हामी नेपालीको अवश्य होइन । हाम्रो इतिहासलाई हेर्ने हो भने पनि खान नपाए पनि हामी कसैको दास बनेका छैनौँ, पराधीन बन्नु परेको छैन, किनकि यो गोरक्ष भूमि हो, यो नेपाल हो, तसर्थ उहाँलाई खुशी नबनाईकन, उहाँको कृपा, आशीर्वाद प्राप्त नगरीकन यो मानसिक दासत्वबाट हामी कहिल्यै मुक्त हुन सक्तैनौँ । तसर्थ हामी सबैले यही प्रार्थना गरौँ- हे गुरु गोरखनाथ ! हामीलाई रक्षा गरिदिनुहोस्, हाम्रो देशलाई रक्षा गरिदिनुहोस्, हामी सबै नेपालीमा नेपालीपन जागृत होस् र हामी सबैमा सुसंस्कारको उदय होस्, कुसंस्कारको अन्त्य होस् । अस्तु ।